# राजा स्थितिराज मल्लद्वारा वि.सं. १४३६ (ने.सं. ५०० मा बनाउन लगाइएको कानून)

## (मानवन्यायशास्त्र) ⊗

## न्यायविकासिनी

## ऋणदानप्रकरण



१. ॐ धर्मलाइ नमस्कार छ ।

२. यो संसार अन्धकारले ढाकिएको थियो । यसको बारेमा कसैले केही थाहा पाएको थिएन । त्यस अवस्थामा चार मुख भएका भगवान् ब्रह्माजीको उत्पति भयो ।

३. सूर्य, चन्द्र, वायु, अग्नि, द्युलोक, भूलोक, जलदेवता, प्राणीको आफ्नो हृदय, यमराज, दिन, रात, प्रातःसंन्ध्या, सायंसन्ध्या र धर्मले मानिसको चालचलन जान्दछन् ।

४. जहाँ जुन धनलाई ऋणको रूपमा दिइन्छ लिइन्छ, त्यस्तो ऋण दिनु र लिनुलाइ ऋणदान भनी भनिन्छ ।

---

⊗ यसमा दिईएको क्रमाङ्क अध्ययन र उद्वरण प्रयोजनका लागि आयोगका तर्फबाट राखिएको हो ।

५. बाबुको मृत्यु भएपछि छोराहरूले बाबुको ऋण भागअनुसार तिर्नुपर्छ । छुटिएको भए पनि नछुटिएको भए पनि बाबुको ऋणरूपी भारलाई छोराहरूले बराबर बेहोर्नुपर्दछ ।

६. नछुट्टिएको अवस्थामा काका, दाजुभाइ वा आमाले परिवारको भरणपोषणको लागि जुन ऋण लिएका हुन्छन्, त्यो सबै अंशबण्डा हुँदा तिर्नुपर्छ ।

७. बाबुले लिएको ऋण छोराहरूले तिरेनन् भने बाबुको मृत्युपछि पितामह (बाजे) ले लिएको ऋण पौत्र (नाति) हरूले तिर्नुपर्दछ । नातिपछिको वंशको चौथो पुस्ताका अर्थात् प्रपौत्र (पनाति) हरूले भने तिनुपर्दैन ।

८. मेरा साहुबाट मलाई छुटाउने छ, मेरा ऋणीहरूबाट पनि ऋण असुल्नेछ र मलाई मुक्त पारिदिनेछ भनी बाबुहरूले आफ्नो स्वार्थको लागि छोराहरू चाहन्छन् । यस कारण छोराले स्वार्थ छोडेर परिश्रमपूर्वक आफ्ना बाबुलाई ऋणबाट मोचन गराउनुपर्छ । जसले गर्दा बाबु नरकमा पर्दैन ।

९. तपस्वी अथवा अग्निहोत्री ऋण नतिरी मरे भने तिनको तपस्या तथा अग्निहोत्रको फल ऋण दिनेले पाउँछ ।

१०. मोजमजा गर्दा लागेको ऋण, क्रोधको कारण झगडा पर्दा लागेको ऋण, रक्सी खाँदा लागेको ऋण, जूवा खेल्दा लागेको ऋण, कसैको जमानत बस्दा लागेको ऋण बाबुको भए छोराले र छोराको भए बाबुले तिर्नुपर्दैन ।

११. दुःख पर्दा परिवारको पालनपोषणका लागि बाबुको सल्लाहबाट छोराले लिएको ऋण बाबुले तिनुपर्छ ।

१२. परिवारको भरणपोषणको लागि शिष्य (चेला), अन्तेवासी (गुरुकहाँ बसेरै पढ्ने चेला), दास (कमारो), स्त्री तथा नोकरले लिएको ऋण पनि घरको मूलीले तिर्नुपर्छ ।

१३. परदेश गएका बाबु, काका, दाजुले लिएको ऋण ऋण लिएको २० वर्षभन्दा अघि तिर्नुपर्दैन ।

१४. नछुट्टिंदै परिवारमा लिइएको ऋण सबै मरेपछि बाँचेकाले तिर्नुपर्छ । ऊ पनि मरेपछि उसको छोराले तिर्नुपर्छ ।

१५. लोग्ने र छोराले लिएको ऋण आफू साक्षी बसेर लिएको अवस्थामा बाहेक स्वास्नीमान्छेले तिर्नुपर्दैन ।

१६. मर्न लागेको लोग्नेले अह्राइएकी, छोरा नभएकी विधवाले पतिले लिएको ऋण तिर्नुपर्छ । अथवा त्यो सम्पति जसले खान्छ, उसले त्यो ऋण तिर्नुपर्छ । किनभने धन र ऋण सँगसँगै आउँछ ।

१७. आपत्कालबाहेक अरू बेला स्त्रीले लिएको ऋण पतिले तिर्नुपर्दैन। पति परदेशमा गएको बेलामा परिवारको भरणपोषणको लागि स्त्रीले लिएको ऋणचाहिँ पतिले तिर्नुपर्छ ।धोबी, व्याधा, गोठाला, सुँढीका स्वास्नीले लिएको ऋण उनका पतिले तिर्नुपर्छ।किनकि उनीहरूमा परस्परमा विश्वास छ र परिवार पनि स्त्रीहरूमा निर्भर छ ।

१८. छोरा भएकी विधवा स्त्री छोरालाई छोडेर पोइल जान्छिन् भने उनको स्त्रीधन दोस्रा पतिले पाउँछन् । पहिलो पतिको धन भने पहिलो पतिका छोराले नै पाउँछन्, दोस्रा पतिले पाउँदैनन् ।

१९. निर्धन तथा छोरा नभएकी विधवा स्त्रीले जब दोस्रो पति लिन्छिन्, त्यस दोस्रो पतिले पहिलो पतिले लिएको ऋण तिर्नुपर्छ। किनभने स्त्री सम्पति हो र सम्पति लिनेले ऋण पनि सकार्नुपर्छ ।

२०. लोग्नेले लगाएको ऋण र छोरासहित जुन विधवा स्त्रीले अर्को पति लिन्छिन्, त्यस पतिले त्यो ऋण तिरेर स्त्रीलाई ऋणमुक्त गराउनुपर्छ ।

२१. अन्तिम स्वैरिणी र उत्तम पुनर्भूका लोग्नेले लिएको ऋण जसले त्यस स्त्रीलाई भोग गर्छ, उसले तिर्नुपर्छ ।

२२. स्त्रीले गरेको काम त्यसमा पनि विशेष गरेर घर जग्गा दान दिने, बन्धकी राख्ने र बिक्री गर्ने काम प्रामाणिक ठहरिँदैन भनी विद्वान्हरू भन्छन् ।

२३. स्त्रीले गरेको काममा पतिको अनुमति छ भने त्यो प्रामाणिक हुन्छ । पति नभएमा छोराको त्यसमा अनुमति छ भने त्यो प्रामाणिक हुन्छ। पति वा पुत्र दुवै नभएमा त्यसमा राजाले अनुमति दिनुपर्छ, त्यसपछि मात्र स्त्रीले गरेको काम प्रामाणिक ठहरिन्छ ।

२४. लोग्नेले स्वास्नीलाई प्रेमपूर्वक दिएको घर जग्गा आदि अचलबाहेकको सम्पति चीज लोग्ने मरेपछि पनि स्त्रीले स्वतन्त्रतापुर्वक भोग गर्न पाउँछिन् ।

२५. मालिकको आज्ञा नपाइकन दासले गरेको काम प्रामाणिक ठहर्दैन, किनभने दास आफैं मालिक होइन ।

२६. बाबुको इच्छाविना छोराले गरेको काम पनि प्रामाणिक ठहर्दैन, किनभने प्रामाणिकताको दृष्टिले छोरा र दास बराबरै हुन् ।

२७. यस लोकमा ३ जना मात्र स्वाधीन छन्- राजा, आचार्य र घरको मूल मानिस ।

२८. सबै दुनियाँ पराधीन छन्, राजा स्वाधीन छन् । शिष्य पराधीन छन्, आचार्य स्वाधीन छन् । स्त्री, छोरा, दास आदि आश्रित व्यक्ति पराधीन छन्, घरको मूली स्वाधीन छन् ।

२९. आठ वर्ष नपुगुञ्जेलको मानिस गर्भमा रहेको बालक जस्तै हुन्छ । सोह्र वर्ष नपुगुञ्जेलको बालक अनाडी कहलाउँछ ।

३०. बाबु, आमा बूढा भए पनि छोरा पराधीन हुन्छ। बीउको प्राधान्यको कारणले आमाभन्दा बाबु मुख्य हुन्छन्। बाबु नभएपछि आमा र आमा नभएपछि जेठा दाई स्वाधीन अर्थात् घरको मालिक हुन्छन् । आफूप्रति निर्भर सबै मानिसहरूमा ती स्वाधीन हुन्छन्। अनुशासन पालना गराउन, दान गर्न र सम्पति बेचबिखन गर्न यिनीहरू स्वाधीन हुन्छन् ।

३१. बालकहरू जस्तै यिनीहरू अर्थात् अरूप्रति निर्भरहरू पराधीन हुन्छन्। धर्मशास्त्रीहरूले उनीहरूले गरेको काम अप्रामाणिक हुन्छ भनेर भनेका छन् ।

३२.	स्वतन्त्र भएर काम गर्दा पनि जो नियम नाघेर काम गर्छ, उसले गरेको काम अप्रामाणिक हुन्छ भनी धर्मशास्त्रीहरू भन्छन्। कामक्रोधद्धारा अभिभूत, रोगी, डर र व्यसनद्वारा पीडित, रागद्वेषले युक्त व्यक्तिले गरेको काम पनि नियमभन्दा बाहिरको भएकोले अप्रामाणिक हुन्छ ।

३३.	कुलमा ज्येष्ठ र श्रेष्ठले नियममा रही गरेको काम प्रामाणिक हुन्छ । तिनले पनि नियममा नरही गरेको काम प्रामाणिक हुँदैन ।

३४.	प्रामाणिक कुराद्वारा यत्नपूर्वक प्रमाणको परिपालना गर्नुपर्छ। अव्यवस्थित प्रमाणद्वारा प्रमेयहरू पनि नष्ट हुन्छन् ।

३५.	कसैलाई धन दिँदा लिखित, साक्षी र भोग तीन प्रकारका प्रमाण हुन्छन्। यी तीन थरी प्रमाणलाई आधार मानेर धन दिँदा धन फिर्ता पाउन सकिन्छ ।

३६.	लिखित प्रमाण सधैं बलियो हुन्छ।जीवितावस्थामा साक्षी प्रमाण हुन्छन्। काल धेरै बितेपछि भोग नै प्रमाण हुन्छ । शास्त्रको भनाइ यही छ ।

३७.	तीनथरी प्रमाणमध्ये पनि क्रमशः लिखितभन्दा साक्षी बलियो, साक्षीभन्दा भोग बलियो हुन्छ। भोग नै सबभन्दा बलियो हुन्छ ।

३८.	लिखित प्रमाण हुँदाहुदै साक्षीहरू जीवित हुँदाहुदै पनि जबसम्म अचल सम्पतिमा भोग हुँदैन, तबसम्म त्यसमा स्थिरता हुँदैन ।

३९. आफ्नो मूर्खताद्वारा आफ्नो सम्पति अरूलाई भोग गराउने मानिसले आफ्नो जीवनकालमा पनि त्यस सम्पतिको भोग गर्न पाउँदैन ।

४०. कसैको धन १० वर्षसम्म अरू कसैकहाँ रह्यो र त्यस बेलामा पनि त्यस धनको स्वामीले धनको बारेमा कुरा उठाएन भने सो धन जोसँग छ, उसैको हुन्छ ।

४१. जड र नाबालकबाहेकको धनको स्वामी आफ्नो धन अरूले भोग गरेको हेरेर बसिरहन्छ भने जसले धनको भोग गरेको छ, त्यो धन त्यसैको हुन्छ ।

४२. बन्धकी राखिएको सम्पति, बलजफ्ती हरिएको सम्पति, बालकको धन, धरौटीको रूपमा राखिएको धन, धितो, स्त्रीधन, राजस्व र विद्वान्को धन अरूले भोग गर्दैमा उसको हुँदैन ।

४३. स्त्रीधन र राजकीय धन १०० वर्षसम्म भोग गरे पनि विनाप्रमाण कसैको हुँदैन ।

४४. जहाँ भोग पनि देखिँदैन, लिखित पनि देखिँदैन, त्यहाँ लिखित प्रमाण हुन्छ, भोग प्रमाण हुँदैन ।

४५. भोग गरे पनि लिखित प्रमाणविना त्यो प्रामाणिक हुँदैन। भोग गर्नेको मृत्यु भएपछि भने उसका हकदारको त्यसमा अधिकार लाग्छ ।

४६. कसैलाई विश्वासपूर्वक राख्न दिएको सम्पति त्यस सम्पतिको मालिकको अनुमतिविना कसैलाई दिनु, बलपूर्वक हरण गर्नु,

नासोको रूपमा राखिएको सम्पत्ति, लुकिछिपी चोरेर प्रयोग गर्नु, ऋण लिएको कुरा, सम्पत्तिको मालिकको अनुपस्थितिको भोग यी ६ वटा कुरामा भोगको प्रमाण हुँदैन ।

४७. झगडा टुङ्गिगनुभन्दा अगाडि बादी र प्रतिवादीको मृत्यु भयो भने उनीहरूका छोराहरूले विवादास्पद कुराको निर्णयको लागि प्रक्रिया अघि बढाउनुपर्छ । केवल भोग गर्नाले प्रमाण पुग्दैन ।

४८. बाबुभन्दा ३ पुस्ताअघिदेखि जुन कुराको भोग अन्यायपूर्वक भए पनि गरी रहिएको छ, त्यो कुरा पछिल्लो पुस्ताबाट कसैले पनि हर्न सक्दैन ।

४९. मर्न लागेको बेलामा ऋणीले केही भनेको छैन भने ऋणीको मृत्यु भएपछि साक्षीहरू जीवित भए पनि प्रमाण लाग्दैन ।

५०. ऋणीको मृत्यु भएपछि साक्षीहरूको वचन प्रमाण हुँदैन । ऋणीको जीवनकालमा मात्र साक्षीहरूको वचन प्रमाण हुन्छ ।

५१. रोगीले मृत्युशय्यामा जुन विधिसम्मत तथ्य भन्दछन्, पूर्वोक्त ६ वटा विषयमा उनको मृत्युपछि त्यही प्रमाण हुन्छ ।

५२. ऋण लिने आदि कुरामा पछिल्लो स्थिति प्रामाणिक हुन्छ । दान दिने आदि कुरामा पहिलो स्थिति प्रामाणिक हुन्छ ।

५३. धन बढाउनको लागि धन दिने लिने जुन काम हुन्छ, त्यो कुसीद हुन्छ। कुसीदी (ब्याजमा रुपियाँ लगाउने) हरूको वृत्ति त्यसबाट चल्छ ।

५४. कायिका, कालिका, कारिता, चक्रवृद्धि गरी ४ थरी ब्याजको प्रकार शास्त्रमा कहिएको छ ।

५५. मूल धनमा ब्याज जोडेर किस्ताबन्दीमा भुक्तानी गरिनेलाई कायिका भनिन्छ । प्रतिमहिना ब्याज दिइनेलाई कालिका भनिन्छ । ऋणीले आफ्नो अनुकूलमा प्रतिमहिना अथवा पछिल्ला महिनाको ब्याजसमेत जोडेर बुझाउनेलाई कारिता भनिन्छ। मूल धनसहित ब्याजको ब्याज पनि एकमुष्ट बुझाउनेलाई चक्रवृद्धि भनिन्छ ।

५६. सबै ठाउँमा लागू हुने ऋणहरूको ब्याजको विषयमा बताइयो । आ-आफ्नो देशको नियमअनुसार ब्याज लिने व्यवस्था फरकफरक रूपमा पनि निर्धारण गरिन्छ ।

५७. देशदेशमा ब्याजका दरहरू भिन्नाभिन्नै तोकिएका छन् । जस्तै कसैमा दुई गुना ब्याज लिइन्छ भने कसैमा तीन गुना, चार गुना तथा आठ गुना पनि ब्याज लिइन्छ । सुन, धान, वस्त्रहरूमा क्रमशः दुई, तीन, चार गुना ब्याज लिइन्छ । रसयुक्त चीजमा आठ गुना ब्याज लिइन्छ । पोथी पशुहरूमा उनका सन्तान ब्याजका रूपमा लिइन्छन् ।

५८. प्रेमले दिएका ऋणको ब्याज लाग्दैन, कहिलेकहीँ त्यसको तमसुक पनि हुँदैन । ६ महिनाभन्दा पछि त्यसमा पनि ब्याज लाग्दछ ।

५९. ब्याजसम्बन्धी यो विधि बताइयो । यसलाई कार्यरूपमा परिणत गर्ने भन्ने कुरा आआफ्नो नियमअनुसार हुन्छ । अनाजहरूको ब्याज तीन प्रकारको बताइयो । जो ब्याजद्वारा जीविका गर्दछ, त्यो वार्धुषि कहलाउँछ ।

६०. वैश्य जातिको ब्याजवृत्तिले व्यावहारिक आपत् टर्ला, तर ब्राह्मणले ठूलाठूला आपत्तिहरूमा पनि ब्याजवृत्ति नगर्नू ।

६१. जुन व्यक्तिको कुलमा र ऊ स्वयंले ब्राह्मणलाई तिर्नुपर्ने धन खाए-मासेको छैन, त्यो व्यक्तिले स्वयं कमाएको उसको व्यवहारबाट बचेको धन उसका कुलका बन्धुलाई दिनू, त्यस्ता बन्धु नभए उसका जातका व्यक्तिलाई दिनू, ती पनि नभए गहिरो पानीमा राखिदिनू । उसले वा उसका कुलका कसैले ब्राह्मणको तिर्नुपर्ने भए सबभन्दा पहिले त्यो तिरिदिनू ।

६२. ऋणीले धनीसँग लिएको ऋण बुझाएपछि ऋण चुक्ता भएको कुरा जनाउने भरपाई धनीले ऋणीलाई दिनुपर्छ । सो नभएमा तिमीले फलाना मितिमा मसँग लिएको ऋण आजको मितिमा बुझाएको हो भनी स्वीकार गर्नुपर्छ । यसो भएमा धनी ऋणीमा परस्पर व्यवहार सफा हुन्छ ।

६३. ऋण लिने दिनि दुवै थरीले विश्वासका लागि फलाना समयमा फलानाले फलानालाई यति धन दिएको हो भन्ने लिखत र सो देख्ने साक्षी यी दुवैलाई प्रमाणको रूपमा राख्नुपर्छ । कसैले कहीँ उपस्थित हुनका लागि वा केही दिनका लागि वा कुनै

कुराको सत्यता साबित गरिदिनका लागि उक्त तीनै कुरामा तीन प्रकारको जमानी हुन्छ भनेर विद्धान्हरूले मानेका छन् ।

६४. ऋण लिने व्यक्तिले आफूले लिएको ऋण नतिरेमा या त्यस ऋणको निमित्त राखेको धितो नै गायब गरी ऋणी बेपत्ता भएमा जमानीले त्यस ऋणीलाई धनीका सामु उपस्थित गराउनुपर्छ । जमानीले ऋणीलाई उपस्थित गराउन नसके स्वयं उसले नै त्यो ऋण तिर्नुपर्छ ।

६५. एउटै कारोबारमा धेरै जमानी रहेछन् र ऋणी धितैसमेत बेपत्ता भएछ भने यस्तो स्थितिमा जमानीहरू मिलेर धनीको धन तिर्न मञ्जूर भएछन्, तर लिखतमा रकम बढाइएको पाइएमा जमानीहरूले धनीलाई इच्छाअनुसार कारवाही गर्न सक्छन् ।

६६. ऋणीले धनीको धन पचाइदिएकोले धनीले जमानीलाई पक्रँदा उ त्यो धन तिर्न बाध्य हुनुपऱ्यो भने ऋणीले त्यस जमानीलाई उसले धनीलाई तिरेको दोब्बर तिर्नुपर्छ ।

६७. धनी ऋणी दुवैलाई अँचेट्न पनि सक्ने, निगरानी गर्न पनि सक्ने, दुवैको पत्यारको व्यक्तिलाई औधि भन्दछन्। त्यो विलक्षणको हुन्छ। उ दुवैबाट आर्थिक लाभ उठाउँदैन। किन्तु आफ्ना विवेकले दुवैलाई त्यति मर्का नपर्ने गरी ऊ कुनै व्यवस्था तोक्छ ।

६८. अन्यत्रबाट ल्याएर पनि व्यवहार सफा राख्नुपर्छ वा ऋणीबाट त्यो धनबराबरको कुनै जिन्सी माल राखेर ऊ स्वयं धनीको धन चुक्ता गरिदिन्छ । त्यो जिन्सी माल जोगाई राखिने vekmपनि

हुनसक्छ । भोग गरिने पनि हुन सक्छ । त्यसमा ऋणीलाई फाइदा पनि हुन सक्छ, बेफाइदा पनि हुन सक्छ, न बेफाइदा पनि हुनसक्छ। लिखत दुई प्रकारका हुन्छन्- आफ्नै हस्ताक्षरको एवं अरू साधनद्वारा तयार गरिएको ।

६९. साक्षीसमेतको वा साक्षीविनाको गरी दुइ प्रकारका लिखत हुन्छन्।यी लिखतहरू तीती देशका रीतिस्थितिअनुसार हुन्छन्। देशाचारविरूद्ध भए पनि औधिले तोकेको नियममा बाँधिएको छ र लिखतको विन्यासक्रम एवं त्यसमा परेका अक्षरहरू लुप्त या टुटेका छैनन् भने त्यो लिखत प्रामाणिक मानिन्छ ।

७०. मादक पदार्थ पिएर मात्तिएको, अरूद्वारा आक्रमण गरिएको वा मुद्दा लगाइएको, स्त्री र बालक (उमेर नपुगेका) द्वारा गराइएको, जबर्जस्ती गराइएका, डर त्रास देखाएर धम्कीद्वारा गराइएको र छलकपटबाट गराइएका यस्ता लिखतहरू प्रामाणिक मानिंदैनन् ।

७१. साक्षी, धनी, ऋणी र लिखत लेख्ने व्यक्तिसमेत मरिसकेका छन् भने पनि कुनै बाधा छैन र लिखतको आधार (धितो वा मूल विषय) ठीक छ भने त्यो लिखत प्रामाणिक मानिन्छ ।

७२. धितो राखिने चीज दुइ प्रकारका हुन्छन्- (१) स्थावर (अचल जग्गा, घर आदि) (२) जङ्गम (चल घोडा, गाई, भैंसी आदि) । यी दुवै प्रकारका धितो राखिने कुराहरू खराब नभएका र भोगमा छन् भने मात्र ग्राह्य हुन्छन् नत्र हुँदैनन् ।

७३. साक्षीहरू मरिसकेका भए तापनि धनीले ऋणीलाई वा उस्का उत्तराधिकारीलाई तिमीहरूले हामीलाई बुझाउनुपर्ने यति धनको यस्तो लिखत मसँग छ भनेर समय-समयमा सो लिखत पूरै सुनाएको नसुनाएको जे भए पनि देखाएकोचाहिँ छ भने सर्वत्र त्यस्तो लिखत प्रामाणिकरूपमा योग्य हुन्छ ।

७४. साक्षीहरू विद्यमान भए तापनि तिमीहरूबाट हामीले लिनुपर्ने यति धन छ भनी कहिल्यै ऋणीलाई सुनाएको छैन, लिखतको आकार पनि देखाएको छैन र केबल व्यवहारको लागि तयारमात्र पारिएको लिखत छ भने त्यस्तो लिखत प्रामाणिक मानिँदैन ।

७५. लिखत अर्कै देशमा राखेमा वा आगोले डढेमा वा लिखत नलेखी त्यसै लेनदेन गरेमा वा लिखत कसैले हरेमा सज्जन व्यक्तिहरूले केही समय लगाएर अध्ययन गरी निर्णय दिनू ।

७६. कहीँ यो लिखत त्यसै समयमा लेखेको हो वा पछि मलाई फसाउन धनीले तयार गरेको हो भन्ने ऋणीलाई शङ्का लागेमा युक्तिसाथ आफ्ना हातको चिह्न (सही) त्यसमा छ कि छैन र त्यो मिल्छ मिल्दैन निहारेर हेर्नू ।

७७. लिखतमा अरू नै व्यक्तिले मिल्दो गरी सही गरिदिएको वा अरूअरू नै कारणहरूले तयार गरेको पनि हुनसक्छ । त्यस कारण आफू (ऋणी) लाई विश्वास नलागेमा आगम हेतुहरूद्वारा त्यसको परीक्षण गर्नुपर्छ र सही कुरा ठम्याउनुपर्छ ।

७८. व्यवहार लिखितरूपमा जस्तै अलिखित रूपमा पनि हुन्छ । लिखित अलिखित जे भए पनि लेनदेन व्यवहार साक्षीयुक्त छ भने पनि पछि धनीले साक्षीहरूद्वारा साक्षीयुक्त व्यवहारलाई हरण (आफ्नो अनुकूल बनाउनेतर्फको प्रयास) नगर्नू, लिखत नै साक्षीहरूभन्दा बलियो हुन्छ । लिखत भएपछि साक्षी नभए पनि काम चल्छ ।

७९. च्यातिएको हुनु, क्रमागत छुट्टिनु, पूरै लिखतै अपहरित हुनु, अस्पष्ट हुनु, यी लिखतका दोष हुन् । यस्तो भएमा अर्कै लिखत तयार गरिनुपर्छ । लिखत तयार गर्ने तरिका यो हो ।

८०. शङ्कायुक्त कामहरूमा धनी र ऋणीको विवाद हुन लाग्दा सुनेका एवं अनुभव गरेका हुनाले साक्षीहरूबाट सिद्धान्तको रूपमा व्यवहार स्पष्ट भएको देखिन्छ ।

८१. सन्देहयुक्त काम कुराहरूमा दुवै वादी-प्रतिवादीहरू विवाद गर्न लाग्दा देखेका, सुनेका र अनुभवसमेत गरेका हुनाले साक्षीहरूबाट वास्तविक तथ्य व्यक्तिन्छ । त्यस कारण साक्षीको आवश्यकता हुन्छ । कान र आँखाले आफ्ना सामुका विषयवस्तु प्रत्यक्ष साक्षात्कार गर्ने हुनाले साक्षीको महत्त्व हुन्छ । कानले अरूले भनेको कुरा सुन्ने स्वविवेकले विषयवस्तु केलाउनुपर्छ । आँखाले प्रत्यक्ष गर्ने भन्ने कुरा शरीरको काम (काय-कर्म) हो ।

८२. विद्वान्हरूले साक्षी एघार प्रकारका हुने बताएका छन् । त्यसमा ५ प्रकारका साक्षीहरू बनाइएका (कृत्रिम) हुन्छन्, ६ प्रकारका

साक्षीहरू प्रकृतिसिद्ध (अकृत्रिम) हुन्छन् । (१) लेखेर प्रस्तुत गरेको (२) यस्तो भनिदिनुपर्‍यो भनी सम्झाइएको (३) आफूखुशी साक्षी हुन पुगेको (४) गोप्य साक्षी (५) खुल्लमखुल्ला साक्षी- यी बनाइएका साक्षीहरू भए । अकृत्रिम साक्षी पनि ६ प्रकारका हुन्छन् भनेर विद्धान्हरूले भनेका छन् । (१) जुन गाउँका झगडियाहरूको विवाद परेको छ त्यो गाउँ पनि साक्षी हुन्छ । (२) मुद्दा छिन्ने हाकिम पनि साक्षी हुन्छ । (३) झगडियाहरूका राजा पनि साक्षी हुन्छन् । (४) दुवैका कुरा बुझेर व्यवहार तयार गरिदिने व्यक्ति पनि साक्षी हुन्छन् (५) मतलबी झगडियाले युक्तिसाथ आफूतर्फ खिँचेको प्रभावशाली व्यक्ति पनि साक्षी हुन्छ।(६) कुलको विवादमा कुलको सदस्य पनि साक्षी हुन्छ ।

८३. कुलको विवादमा कुलको सदस्य पनि साक्षी हुन्छ । कुलीन, छलकपट नगर्ने व्यक्तिहरु पनि जन्मतः, कर्मतः तथा अर्थतः साक्षी हुन्छन् ।

८४. तल्ला तहका साक्षीहरू निन्दनिय हुन्छन् । त्यस कारण साँचो बोल्ने पवित्र आचरणका ब्राह्मण, वैश्य, क्षत्रिय र अनिन्दित शूद्रहरू पनि साक्षी हुन सक्तछन् । जुन-जुन वर्णका व्यक्तिहरूको विवाद परेको छ, त्यहीत्यही वर्णका साक्षी हुन्छन् अथवा सबै वर्णका व्यक्तिहरूका विवादहरूमा सबै वर्णका व्यक्तिहरू साक्षी हुन सक्छन् ।

८५. व्यापारी समूहहरूमा उनीहरूकै वर्गका व्यक्तिहरू साक्षी हुन्छन् । बाहिरका व्यक्तिहरूमा बाहिरकै व्यक्तिहरू साक्षी हुन्छन् । स्त्रीहरूका व्यवहारमा स्त्रीहरू नै साक्षी हुन्छन् ।

८६. व्यापारी आदिमा पनि कहिलेकहीँ कसैले द्वेष गर्ने हुनाले तिनीहरूबाटै साक्षी तोक्न मिल्दैन । किनभने दुष्टहरू सधैं दुष्टै हुन्छन् ।

८७. साक्षीविनाका विवाद पनि शास्त्रहरूमा विद्वान्हरूले ५ प्रकारका बताएका छन्- (१) भनाइ (बदनाम) बाट (२) विपक्षीको कसूरबाट (३) भनाइ फरकपर्नुबाट (४) निवेदकको आफ्नै भनाइबाट (५) मरेपछिका कुराबाट । यसका कारण क्रमशः यी हुन्- (१) वैदिक विद्वान् आदिका केवल भनाइबाट (२) चोरी आदि कसूर देखिनुबाट (३) विवादमा साक्षीहरूका कुरा फरक पर्नुबाट (४) आफूले बोलेका कुराको आफैंबाट ठीक समर्थन नहुनुबाट (५) मूल कारणी मरेपछी उसले मर्न लाग्दा सुनाएबाहेकका कुराबाट ।

८८. कुनै प्रयोजनका निमित्त पक्ष र विपक्षका व्यक्तिहरू विवाद गरिरहेका अवस्थामा साक्षीहरू बारम्बार बोलिरहन्छन् भने जसको पूर्व पक्ष हुन्छ ती साक्षी त्यसैका हुन्छन् ।

८९. साक्षीले लख गरेको व्यक्ति मर्‍यो वा अन्यत्र गयो भने उसका विरोधी साक्षीले बोलेको प्रमाण हुन्छ, उसले बोलेको प्रमाण हुँदैन ।

९०. धेरै समयपछि पनि लेखेको प्रमाण हुन्छ, त्यसले गर्दा काम विश्वासिलो हुन्छ । त्यस कारण जाने आफैं लेख्नू, नजाने अरूलाई लेखाउनू ।

९१. आठौं वर्ष नपुगेसम्म साक्षीको काम सफल मानिंदैन । आफूखुशी स्वयं साक्षी बन्न आउने र आफू नदेखिई कुरामात्र यसो हो भनिदिने आकाशे साक्षीको काममा पाँचौं वर्ष पूरा भएपछि मात्र प्रमाण मानिन्छ । गोप्य साक्षी (गूढ साक्षी) को कुरा तेस्रो वर्ष भएपछि विश्वासिलो मानिन्छ । उक्त साक्षीको सफलता (त्यतिखेरै) मानिन्छ ।

९२. आफू नदेखिई कुरा यसो हो भनिदिने मुख पर्न नचाहने साक्षीका प्रति समय-समयका नियम हुन्छन् । किनभने साक्षीको स्मृतिशक्तिका आधारमा तर्क सम्भावना हेर्ने हो भनी शास्त्र जान्नेहरू भन्दछन् ।

९३. जुन व्यक्तिका स्मरणशक्ति र सुन्ने शक्ति नष्ट भएका छैनन्, सधैं ताजा रहन्छन्, त्यो व्यक्ति धेरै समयसम्म पनि साक्षीको रूपमा काम गर्न लायक हुन्छ ।

९४. साक्षीको आधार लिनुनपर्ने अरू ६ प्रकारका मुद्दाहरू हुन्छन् । यस्ता मुद्दाहरू छिन्दा लक्षणबाटै विचार गर्नुपर्छ भनी विद्वान्हरु भन्छन् ।

९५. राँको आगो वा हतियार हातमा लिएको व्यक्ति, नजानिएको व्यक्ति, मार्न आइलाग्ने घातक व्यक्ति, एकैपटक कपाल

लुछालुछ गरिरहेका व्यक्तिहरू, अरूका स्त्रीमा जाइलाग्ने व्यक्ति, कोदालो हातमा लिएर पुलको नगिचमा गई पुल भत्काउन लाग्ने व्यक्ति, हातमा खुकुरी लिएर वन विनाश गर्ने व्यक्ति कुटपीट र नराम्रो गालीगलौज गर्ने व्यक्ति, त्यसको निशान जिउमा भएको व्यक्ति, यस्ताका मुद्दामा यिनको कसूर कतिसम्म छ भनी आफैं परीक्षा गरी हेर्नू, साक्षी बकाइरहनुपर्दैन ।

९६. वैरभावले गर्दा आफूलाई फसाउन अर्को व्यक्तिले आफ्नो जस्तै भेष बनाएर अन्यत्र उपद्रव गरिदियो भने त्यसो गर्नुका कारणको विषयमा गति सामर्थ्यहरूद्वारा उपयुक्त परीक्षण गराउनुपर्छ। कारणी (आफू) सँग आर्थिक कारोबार भएका व्यक्ति, उसका आपस्त व्यक्तिहरू, उसलाई सहयोग गर्ने व्यक्तिहरू, उसका वैरीहरू, कसूर फेला पारेका व्यक्तिहरू, विपक्षीले पैसा ख्वाएर दूषित गराएका व्यक्तिहरू यी सबैलाई साक्षीका रूपमा सोध्नुहुँदैन ।

९७. दास, बेइमान, श्राद्धमा भोजन गराउन अयोग्य, बूढो, स्त्री, बालक, कुमाले, मादक पदार्थको सेवनले मातेको, पागल, लापरबाह, दुःखी, जुवाडे, गाउँको पुरोहित, लामो यात्राको यात्री, समुद्रसम्बन्धी काम गरेर जीविका चलाउने व्यापारी, सन्यासी, रोगी, व्याधा, वैदिक विद्वान्, आचारहीन, नपुंसक, नाचगान आदि गरी जीविका चलाउने, नास्तिक, संस्कारहीन, विनाकारण पत्नी र अग्निलाई त्यागिदिने व्यक्ति, यज्ञ गर्ने शास्त्रीय अधिकार

नभएकाद्वारा यज्ञ गराउने, एउटै भाँडामा खाने, सहायक, शत्रुको मित्र (गुप्तचर), बन्धुवर्ग, सपिण्डभित्रको व्यक्ति, पहिले दोषी साबित भएको, नटुवा, विषजीवी व्यक्ति, सपेरा, अरूलाई विष दिने, अरूका घरवासमा आगो लगाउने, कञ्जूस, शूद्राको छोरो, उपपातकी (साना खालका पाप गर्ने), थाकेको, डकैती जबर्जस्तीजस्ता आँटिला काम गर्ने व्यक्ति, शान्त व्यक्ति, परम्परागत मर्यादा तोड्न सर्वसाधारणले अपनाएको चालचलन अपनाउने, जाली, तेली, मूलाव्यवसायी, भूत पसेको (धामीजस्तो गरी कामेर बक्ने), राजद्रोह गर्ने, वर्ष नक्षत्रहरूको सूचना गर्ने ठिनेमिने ज्योतिषी, उसको क्रियाकलापबाट यो व्यक्ति अपराधी हो भन्ने सबैद्वारा बुझिने व्यक्ति, आफैं आफूलाई बेचिन तयार पर्ने, अङ्गहीन, जीविकाको लागि स्वास्नीद्वारा वेश्यावृत्ति गराउने, नङ खराब भएको व्यक्ति, पहेलो दाँत हुने व्यक्ति, कुष्ठ रोगी, मित्रद्रोही, बदमास, मदिराविक्रेता, इन्द्रजाली, लोभी, उग्र, श्रेणी र गणको विरोध गर्ने, चाण्डाल, चित्रकार, शंखको व्यापार गर्ने, पतित, जाली, ठग, आफ्नो कर्मबाट झरेको, माली, राजकर्मचारी, मनुष्य विष हतियार जल नून मालपुवा आदि बेच्ने र ब्याज बट्टा लाउने ब्राह्मण, आफ्ना धर्मबाट चुकेर भ्रष्ट भएको, अरूको तारिफ गरी खाने, हीन जातिको सेवा गर्ने, बाबुसँग झगडा गर्ने र परस्परमा फुट पार्ने — यहाँ बताइएका यस्ता व्यक्तिहरू साक्षी हुन सक्दैनन् ।

९८. दास, अर्काको बिगार गरेर बाँच्ने दुष्ट इत्यादि साक्षी हुन सक्दैनन् भनेर पहिले जो भनियो, तिनिहरू पनि कामको महत्तालाई दृष्टिमा राखेर कहीँकही साक्षी हुन सक्छन् ।

९९. चोरी डकैती जबर्जस्ती जस्ता साहसिला मुद्दा र गाली बेइज्जती, कुटपीट मुद्दा विनासाक्षी प्रमाणित हुँदैन ।

१००. तिनीहरूमध्ये पनि बालक, एक्लो व्यक्ति, स्त्री, कपटी, कारणीका बन्धुबान्धव शत्रुताले अन्यथा बकिदिन सक्ने हुनाले त्यस्ता व्यक्ति साक्षी हुँदैनन् ।

१०१. बालकमा ज्ञान नहुने हुनाले ऊ जे पनि भनिदिन्छ । स्त्री स्वभावतः असत्य व्यवहार गर्ने हुनाले उनी पनि प्रामाणिक ठहरिन्नन्, कपटी व्यक्तिमा पाप गर्ने बानी परिसकेको हुनाले ऊ पापदेखि डराउँदैन । बन्धुबान्धवहरू पैसाले किनिने हुनाले पैसा पाए जे पनि भनिदिन्छन् । शत्रुले बदला लिनुपर्ने हुनाले ऊ मौका छोपी साटो फेर्छ । त्यस कारण यी साक्षी हुँदैनन् ।

१०२. वादी प्रतिवादी दुवैको जोडतोडसँग विवाद परेका बेला उपयुक्त साक्षी नपाइए पहिले भनिएअनुसार साक्षी बनाउन लायक नभएका व्यक्तिहरूलाई पनि साक्षी बनाउन दुवैतर्फबाट अनुमति मिल्छ भने त्यस्ता व्यक्तिलाई इजलासमा ल्याएर साक्षीका रूपमा सोध्न हुन्छ ।

१०३. जुन व्यक्ति आफ्नो दोष प्रकट भइसकेको हुनाले अस्वस्थ जस्तो देखिन्छ, एक ठाउँबाट अर्को ठाउँ अर्को ठाउँबाट अर्को ठाउँ

हिँडिरहन्छ, प्रत्येकलाई पछ्याउँछ, बेमौकामा खुँला मुख र ठूलो आवाज गरी खोक्छ, जान्ने बुझने व्यक्तिको खोजीमा रहन्छ, दुवै गोडाले जमीन कोरिरहन्छ, दुवै हात र कपडा हल्लाउँछ, उसका मुखमण्डलको रङ्ग फरक हुन्छ, निधार पनि साधारण स्थितिमा भन्दा फरक हुन्छ, उसका ओठ सुक्छन्, उँभो र तेर्छो हेर्छ, कसैले केही नसोधीकन पनि खूब हडबडाउँदै परस्पर प्रसङ्ग नमिल्दो धेरै बोलिरहन्छ, जो यस्तो छ त्यो कपटी साक्षी (कूटसाक्षी) हो । त्यो पापीलाई कडा दण्ड दिनुपर्छ ।

१०४. यस विषयमा म साक्षी छु भनी अरूलाई सुनाएर जो वास्तविक साक्षीले गर्नुपर्ने काम गर्दैन, त्यो व्यक्ति पूर्वोक्त कूटसाक्षीभन्दा पनि बढी अपराधी मानिन्छ ।

१०५. उनीहरूका आचारविचार बानीबेहोरा सबै कुरा बुझेका र बिल्कुलै अपरिचित दुवै थरी साक्षीहरूलाई बोलाएर तिनीहरूलाई शपथ गराएर एकएक गरी अलगअलग सोध्नू ।

१०६. शपथ गराउँदा ब्राह्मणलाई सत्यको शपथ गराउनू । जस्तै यो विवादमा मैले जानाजान झूटा कुराको समर्थन गरेको रहेछु भने मलाई मेरो कुलै सत्यले छाडिदेओस् अर्थात् मेरा कुलका व्यक्तिहरू कोही सत्यवादी नहून् भनी शपथ गराउनू । क्षत्रियलाई शपथ गराउँदा वाहन र हतियारको शपथ गराउनू अर्थात् यस व्यवहारमा मैले गलत बोलेको भए अमुक वाहनले अथवा अमुक हतियारले मेरो विनाश गरोस् इत्यादि । वैश्यलाई

शपथ गराउनुपर्दा गाई, अनाजको बीउ र सुन हातमा लिएर शपथ गर्न लगाउनू । शूद्रलाई सम्पूर्ण पातकहरूले शपथ स गराउनू ।

१०७. साक्षी बकाउनुभन्दा पहिले उनीहरूलाई पुराणहरूमा वर्णित घटनाहरू, धार्मिक वाक्यहरू, सत्य व्यवहारका माहात्म्यहरू, झूटो साक्षी बक्नाका दुष्परिणामहरू सुनाई-सुनाई खूब तर्साउनू ।

१०८. जुन व्यक्ति जानाजान गलत साक्षी बक्छ, त्यसले भोक तिर्खाले आकुलव्याकुल भएर शिर मुडाई नाङ्गै दुःखी बनेर फुटेको माटाका गाग्राको खबटो हातमा लिएर शत्रुका कुलमा भीख माग्न जानुपर्छ । जुन व्यक्ति साक्षीका काममा झूटो बोल्छ, उसलाई शहरमा पस्न प्रतिबन्ध हुनाले भोकले छटपटाउँदै शहरबाहिरको ढोकाबाहिर बसी धेरै-धेरै आफ्ना शत्रुहरूको दर्शन गर्नुपर्छ । साक्षी बस्नुपर्ने ठाउँमा जुन व्यक्ति साँढेको कान जस्तै शिथिल भएर हिँड्छ, त्यसले वरुण देवताका हजार पासाहरूलाई स्वयं पहिरिन्छ । त्यो व्यक्ति एक सय वर्ष पूरा भएपछि एउटा पासोबाट छुटकारा पाउँछ । यसरी बेगिन्ती वर्षसम्म दुःख भोगेर अनि मात्र त्यस पासोको जालबाट छुटकारा पाउँछ । साक्षी बक्दा झुटो बोल्ने व्यक्तिले जति आफ्ना बान्धवहरूलाई मार्छ त्यति म क्रमशः बताइदिन्छु सुन । सामान्य पशुका सम्बन्धमा साक्षीले झुटो बोल्यो भनि उसले ५ जना आफना बान्धवहरूलाई मार्छ अर्थात् त्यति मारेको पाप बोक्छ । गाईका सम्बन्धमा

साक्षी बक्दा झुटो बोलेमा १० जना आफ्ना बान्धवहरूलाई मारेको पाप बोक्छ । घोडाका सम्बन्धमा झुटो बोलेमा १०० जना बान्धवहरूलाई मारेको पाप बोक्छ । मानिसका सम्बन्धको मुद्दामा झुटो साक्षी बक्दा १००० बान्धव मारेको पाप बोक्छ । सुनका सम्बन्धमा साक्षी बक्दा झुटो बोलेमा जन्मिइसकेका र पछि जन्मने पनि आफ्ना बान्धवहरूलाई मारेको पाप बोक्छ । जमीनका लागि भएका मुद्दामा झुटो साक्षी बकेमा सम्पूर्णलाई मारेको पाप बोक्छ । त्यस कारण जमीनका लागि कहिल्यै असत्य नबोल्नू। आफूलाई पवित्र गराउने साधनहरूमा विकल्परहित एकमात्र साधन हो सत्य । स्वर्ग जाने भऱ्याङ पनि सत्य नै हो, जसरी समुद्र तर्ने साधन ठूलो डुङ्गा हुन्छ । हजार अश्वमेध यज्ञको पुण्यलाई एकतर्फ र सत्य व्यवहारलाई एकतर्फ राखेर तौलिँदा सत्य व्यवहार नै हजार अश्वमेध यज्ञभन्दा बढी हुन्छ । एक सय कूप बनाउनुभन्दा एउटा तलाउ बनाउनु असल । एक सय तलाउ बनाउनुभन्दा एउटा यज्ञ गर्नु असल । एक सय यज्ञ गर्नुभन्दा एउटा असल छोरा पाउनु असल । सय भाइ असल छोरा पाउनुभन्दा सत्य व्यवहार गर्नु असल । सत्य व्यवहारले नै पृथ्वी समुन्नतिको ढोका बनिदिन्छिन् । सत्यकै आधारमा सूर्य उदाउँछन् । सत्यले नै वायु सद्गति भएर चलिरहन्छ । सत्यकै आधारमा जल बगिरहन्छ । सत्य व्यवहार गर्नु नै सबभन्दा ठूलो दान हो । सत्य व्यवहार नै सबभन्दा

ठूलो तपस्या हो । सत्य व्यवहार नै सबभन्दा ठूलो धर्म हो, जसले उत्तम लोक प्राप्त गराउँछ भनेर हाम्रो वेदशास्त्र भन्दछ । छोटकरीमा भन्ने हो भने देवताहरू सत्य र मनुष्यहरू झूटा मानिएका छन् । त्यस कारण जसको बुद्धि सत्य व्यवहारमा अडेको हुन्छ, त्यस व्यक्तिले पृथ्वीमा छँदै देवत्व प्राप्त गरिसकेको हुन्छ । अतः झूटो व्यवहारलाई छोडेर साँचो बोल, साँचो व्यवहार गर । यसो गर्नाले तिमिले आफूले चाहेको कुरा पाउनेछौ । झुटो भनेको उल्का हो, डरलाग्दो नरक हो । त्यसका उपासकले त्यही पाउँछन् । नरकमा पनि यमराजका तरवारमात्र हातमा लिएका निठुरी बलिया नोकरहरूले हरबखत ती झूटो बोल्ने पापीका जिब्रा काटिदिएर दुःख दिइरहनेछन् । यमराजका नोकरहरूले झूटो बोल्ने पापीलाई शूलले रोप्छन्, थुतेर आगामा फालिदिन्छन्, पानीका तलाउहरूमा फालिदिन्छन्, पीप रगत बोसोहरूले भरिएका खाडलहरूमा र कुम्भीपाकनामक नरकमा पनि फालिदिन्छन् । उक्त प्रकारले त्यो पापी धेरै समयसम्म दुःखान्त नारकीय वेदना भोगेर पृथ्वीमा जन्मिँदा गिद्ध, काग आदिका योनिमा जन्म लिन पुग्छ । झूटो बोल्नाका उक्त दोषहरूलाई र सत्य बोल्नाका असल गुणहरूलाई बुझेर सत्यले बाँधिई आफ्नो उद्धार गर आफूलाई नगिराऊ । न बान्धवहरूले डुब्न लागेका तिमीलाई पार लगाउन सक्छन् न मित्रहरूले न पर्याप्त धनले नै । ती सबबाट तिम्रो उद्धर सम्भव छैन । तिमी

साक्षी बस्न आउँदा तिम्रा पितृहरू झुण्डिएर भन्छन्- तिमी हामीहरूलाई पार लगाउँछौ वा गिराउँछौ ? तिमीले साँचो बोलिदिए हामी तर्छौं, झूटो बोल्यौ भने गिर्छौं । मनुष्यको आत्मा सत्य रूप छ । सत्यमा सबै कुरा अडेको हुन्छ । त्यस कारण स्वयं आफूलाई सत्य रूप आत्मा वा कल्याण भलोसँग मिलाउने काम गर । जुन दिनमा तिमी जन्मियौ र जुन दिनमा तिमी मर्नेछौ, यदि सत्यलाई अन्यथा गरायौ भने यो जन्म र मरणका बीचको समयलाई तिमी सर्वथा व्यर्थ गराउनेछौ । सत्यभन्दा ठूलो धर्म कुनै छैन, झूटो बोल्नुभन्दा ठूलो पाप पनि कुनै छैन । विशेष गरेर साक्षीको धर्म सत्य बोल्नु हो । त्यसकारण साँचो बोल्नू । जुन अधम व्यक्ति अरूका लागि आफ्ना वाणीले प्रहार गर्छ अर्थात् झूटो बोल्छ; नरकदेखि नडराउने त्यो पापी व्यक्तिले आफ्नालागि के पो नगर्ला ? अर्थहरू वाणीमा बाँधिएका हुन्छन्, अर्थहरूको जरो पनि वाणी नै हो र वाणीबाटै ती अर्थहरू बाहिरिन्छन् पनि । त्यस कारण त्यस्ता वाणीहरूलाई जसले चोर्दछ, त्यो सबै कुरा चोर्ने चोर हो ।

१०९. बोलिमा सबै अर्थ रहन्छ । बोलीको मूलमा मनको भाव रहन्छ।यस कारण मनको भाव जसले लुकाउँछ, त्यो चोर हो ।

११०. साक्षीहरूका कुरा बाझ्यो भने धेरैथरी प्रमाणहरूमा विचार गर्नुपर्छ । प्रमाणहरुमा एकरूपता आएपछि त्यो कुरा सत्य

मान्नुपर्छ । यसको लागि स्मृतिशक्ति प्रबल भएका शुद्ध आचरण भएका व्यक्तिहरूको मदत लिनुपर्छ ।

१११. विवाद भएको कुरामा स्मृतिशक्ति प्रबल भएका व्यक्तिहरूको साक्ष्यमा साक्षीधर्म अडेको हुन्छ ।

११२. निर्दिष्ट विषयमा साक्ष्यको लागि जो साक्षी भएर आउँछन्, तर उचित ढङ्गले प्रमाणलाई स्थापित गर्न सक्दैनन्, त्यस्ताले के बोले भनेर मान्ने कुरा आउँदैन । जुन ठाउँमा देश, काल, उमेर, द्रव्यको परिमाण, आकृति र जातको विषयमा साक्ष्यमा परस्परविरूद्ध कुरा आउँछन्, त्यस ठाउँमा साक्षी ठीक छैन भनेर मान्नुपर्छ । भनाई वा बयानमा जहाँ विरोध हुन्छ, त्यहाँ त्यो साक्षी र उसको प्रतिपादन पनि गलत हुन्छ । जहाँ साक्षीहरू वास्तविक तथ्यभन्दा कम वा ज्यादा बकबक गर्छन्, त्यो पनि नबताएसरह नै हुन्छ । साक्षी बक्ने विधि यो हो ।

११३. बादीको बेहोसीले उसले लेनदेन व्यवहारमा कुनै लिखत पनि गरेको छैन, साक्षी पनि छैनन् अथवा स्वयं वादी छलकपट गर्दछ ढाकछोप गर्छ भने त्यसमा तीन प्रकारको विधि अपनाउनुपर्छ- (१) समयसमयमा वादीलाई गलत बाटो छोडी सत्यपथमा चल्न युक्तिसाथ प्रेरणा दिनु (२) उसले मौकाअनुसार कुरा बदल्न नपाओस् भनेर उसको भनाइ लिखितरूपमा लिनु (३) शपथ गराएर उसलाई सही बाटोमा आउन प्रेरणा दिनु । यिनै तीन उपायले क्रमशः वादीलाई सही दिशामा डोहोऱ्याउनुपर्छ ।

११४. प्रत्यक्ष देख्ने, जान्ने वा दसी फेला पारेर त्यसमा इङ्गित गरी अपराधीको अपराध साबित गराउने प्रयास गर्दा उसले कुरा काट्न पाउँदैन । तीन-चार-पाँच पल्टसम्म घुमाइफिराई उसलाई अपराध साबित गराउन प्रयास गर्नू । यी प्रयास असफल भए पनि देश, काल र परिस्थितिका सम्बद्ध परिणाम र क्रिया आदिद्धारा युक्तिसाथ उसको पिछा गर्नु । यी सबै कुरा असफल भए भने शपथद्वारा नै उसलाई वस्तुतथ्यमा ल्याउन लगाउनू ।

११५. शपथ गराउँदा कालवेलालाई दृष्टिमा राखेर त्यसअनुसार आगो, पानी र उसले स्वयं गरेका पुण्य कर्महरूलाई भाकेर शपथ गर्न लगाउनू ।

११६. बत्तीले अन्धकार हटाई उज्यालो पारे झैं असत्य मार्गबाट हटाई सत्यको बाटोमा हिंड्ने सङ्केत गर्दछ । अतः तिमी निर्दोष भए अग्निले तिमीलाई जलाउँदैन नत्र जलाउँछ भन्नू ।

११७. स्त्रीहरूले आफ्नो पातिव्रत्यशीलता त्यागेका मुद्दाहरूमा, चोरी मुद्दामा, अरूका स्त्री र जग्गा धनहरू जबर्जस्ती लुट्ने जस्ता साहसिला कामसम्बन्धी मुद्दाहरूमा र यो पनि होइन त्यो पनि होइन भनी सबै कुरा इन्कारेमा पनि यसै विधिलाई प्रयोगमा ल्याउनू ।

११८. शपथ लिने काम देवताहरूले पनि गर्दथे, ऋषिहरूले पनि गर्दथे । राक्षसद्वारा बोलाइएका वशिष्ठ ऋषिले पनि शपथ गरेथे ।त्यस्तै सप्तर्षिहरूले इन्द्रका लागि प्रमुख विषय सुल्झाउन

निःशङ्क र निर्विकल्परूपमा जम्मा भएर परस्पर शुद्धिका लागि शपथ गरेथे ।

११९. जुन व्यक्ति अनुचित कुरामा साहस गरेर पनि आफूले गलत काम गरेको स्वीकार गर्छ अथवा स्वयं सभामा गएर मैले अमुक अपराध गरेको साँचो हो, यससम्बन्धमा समाजले वा न्यायालयले तोकेको दण्ड भोग्न म तयार छु भन्छ त्यसलाई उसले पाउने सजायको आधा मात्र दण्ड गर्नू ।

१२०. पापी काम गर्ने व्यक्ति आफ्ना दुष्ट विचारले गर्दा गरेको अपराधलाई ढाकछोप गर्न तर्फ लाग्छ र ऊ स्वयं खडा छ भने त्यसलाई कम दण्ड दिंदा सभ्यहरूको चित्त बुझ्दैन । त्यस कारण त्यस्ता व्यक्तिलाई कडा दण्ड दिइन्छ ।

ऋणदानप्रकरण सिद्धियो ।

# उपनिधि प्रकरण

१२१. जरुरतले विश्वासी व्यक्तिबाट धन लिँदा, यसलाई दिँदा मेरो धन डुब्ने हो कि भन्ने उसको शङ्का हटाउन लिइएको धनभन्दा बढी मूल्यको द्रव्य उसकहाँ जो राखिन्छ, त्यो निक्षेप (नासो) नामक व्यवहारको पद भनी विद्धान्हरूले भन्ने गर्दछन् ।

१२२. अर्को वस्तुले ढाकेर त्यो यस्तो द्रव्य हो भनेर नजनाइकन अर्काका घरमा जो नासो राखिन्छ, त्यसलाई औपनिधिक भन्दछन् ।

१२३. नगनेको नजानेको बन्द प्याकेटमा बाहिर छाप लगाएर जो नासो राखिन्छ, त्यसलाई उपविधिनामक निक्षेप भनिन्छ ।

१२४. त्यो उपनविधिनामक नासो दुई प्रकारको हुन्छ- (१) साक्षी राखेर लिइने (२) विनासाक्षी विश्वासमा लिइने । यसलाई फिर्ता गर्दा पनि जसरी लिइएको छ, उसैगरी गर्नुपर्छ अर्थात् साक्षी राखेर लिएको भए फिर्ता गर्दा पनि साक्षी राखेरै फिर्ता गर्नुपर्छ । अन्यथा अविश्वासिलो हुन्छ ।

१२५. नासो राख्न दिने व्यक्तिले नासो राखेर लिएको धनीको धन फिर्ता बुझाई आफूले नासो राखेको माल माग्दा धनीले फिर्ता नदिएमा राजाकहाँ उजूर गर्नू र राजाले पनि अपराधीलाई दण्डसमेत गरी नासो फिर्ता गराइदिनू । नासोको माल वस्तुतः हराएको ठहरिएमा धनीबाट मालबमोजिमको नगद असूल गराइदिनू ।

१२६. नासो राख्न ल्याउने व्यक्तिको अनुमति नलिई धनीले नासो राखेका मालबाट आर्थिक फाइदा उठाएको थाहा भएमा त्यसमा उजूर गर्नू । सरकारले त्यस व्यक्तिलाई दण्ड गरी नासो फिर्ता गराइदिनू । यस्तोमा नासोको माल पनि दण्ड गरिएको धन पनि दुवै नासो राख्न ल्याउने व्यक्तिलाई दिलाउनू ।

१२७. माल नासो लिएर धन दिने व्यक्तिलाई धन लिने व्यक्तिले आफ्नो धन चुक्ता गरी बुझाएपछि उसको माल फिर्ता दिन आनाकानी गर्दछ, तिम्रो माल नासिएर गयो अब मैले के दिने भन्छ, तर देवताले बनाएका र राजाले बनाएका नियम कानूनसँग सो कुरा मेल खाँदैन भने त्यो त्यसले कपट नै गरेको हो ।

१२८. यी धनसम्बन्धी अभियोग लागेका परन्तु जसरी जे सोधे तापनि ढाकछोप छलकपटमात्र गर्ने, सत्य कुरा कहिल्यै नबताउने व्यक्तिले उनीउपर लागेको अभियोग (मुद्दा) हरूमध्ये कुनै एकमा साबित भएको जनाएमा सबै अभियोगहरूको क्षतिपूर्ति दिनुपर्छ । कालिगढहरूकहाँ कुनै माल उपनिधिको रूपमा वा नासोको रूपमा धितो राखेकोमा उसको नासोसम्बन्धी प्रतिज्ञाअनुसार धनीका रुपैयाँ चुक्ता बुझाई माल निखन्ने सबै प्रकारका व्यवहारहरूका सम्बन्धमा धर्मशास्त्रहरूमा यही विधि देखिएको छ ।

उपनिधि नामको विवादपद समाप्त भयो ।

# संभूयोत्थान प्रकरण

१२९. अब व्यापारी आदि विभिन्न वर्गका व्यक्तिहरू मिलेर आ-आफ्ना भलाइका निमित्त सामूहिक उद्योग गर्नु अर्थात् संभूयसमुत्थाननामक व्यवहारपदको विषयमा बताइन्छ ।

१३०. नाफा कमाउनका लागि परस्परमा मिलेर काम गर्ने व्यापारी समूहको आधार सबैबाट हिस्सा (शेयर)को रूपमा उठाएको मूलधन हुन्छ । त्यो उनीहरूले नै पारित गरेका नियम कानूनअनुसार चल्दछ ।

१३१. त्यसमा घटी-बढी रूपका विभिन्न प्रकारका हिस्साहरू राखिएका हुन्छन् । तिनमा जसको जति हिस्सा छ, हिसाबअनुसार त्यसले त्यत्ति नै नाफा-नोक्सान लाभ-हानि पाउँछ । यसरी कम्पनीका हिस्सेदारहरूले समय विभाजन गरी सबैले सामूहिक कार्यतालिका र कामको बाँडफाँड गरेका हुन्छन् । यसरी सिद्धान्त वा समयमा फरक नपारी सबै सदस्य हिस्सेदारहरूले ठीक-ठीक समयमा फरक नपर्ने गरी आफ्नो-आफ्नो काम समाल्नुपर्छ, समाल्दछन् ।

१३२. सबै हिस्सेदारहरूको सामुहिक बैठकले पारित नगरेको कुरा कसैले गर्‍यो वा बेहोसीले कसैले गल्ती गर्‍यो वा जाना-जानी निषिद्ध कुरा गर्‍यो भने त्यसको क्षतिपूर्ति त्यसैले गर्नुपर्छ ।

१३३. कम्पनीमा देवताबाट हुने, डाँका चोरहरूबाट हुने र राजाबाट आइलाग्ने कुनै ठूलो विपत्ति परेको अवस्थामा कम्पनीका

सदस्यहरूमध्ये कुनै एक व्यक्तिले आफ्ना शक्तिले कम्पनीको सुरक्षा गरेछ भने त्यस वर्षको सम्पूर्ण लाभांशमध्ये १० भागको १ भाग उसलाई पुरस्कार दिनुपर्छ ।

१३४. यसरी आफ्ना शक्तिले पूरै कम्पनीलाई आपत्बाट बचाउने व्यक्ति कम्पनीबाट पुरस्कार लिन नपाउँदै मरेमा उसको नजिकको अंशियार बन्धुलाई दिनू । सो पनि नभए अरू कुनै उसका बन्धुलाई दिनू । यज्ञ गर्दागर्दै ऋत्विक्को मृत्यु भएमा पनि अरू योग्य व्यक्तिले यज्ञको बाँकी काम पूरा गरिदिई यसका लागि कल्पिएको दक्षिणांश लिनू । ऋत्विक्ले आफ्नो बिगार नगरेका असल यजमानलाई त्यागेमा र यजमानले असल ऋत्विक्लाई त्यागेमा ती दुई थरीलाई दण्ड गर्नू । ऋत्विक् तीन प्रकारका हुन्छन्- (१) कुलपरम्परादेखि पितापुर्खाले मानिआएको (२) आफू (यजमान) भन्दा जेठो, सबै आफ्नो (यजमानका) इतिवृत्त जान्ने (३) अर्के (यजमान) ले वरण गरेको । यी तीन प्रकारका ऋत्विक्बाहेक अर्को एक प्रकारको ऋत्विक् हुन्छ र स्वयं यजमानकहाँ नबोलाई आएर कर्मकाण्डमा यजमानलाई प्रेमपूर्वक सहयोग गर्छ । यो चौथो प्रकारको ऋत्विक्लाई आवश्यक नपरे त्यागिदिए पनि पाप छैन । बनियाँले राष्ट्रको नियमअनुसार शुल्क तिर्नुपर्ने भएमा आफूलाई लागेको वा सरकारले कम्पनीलाई लगाएको शुल्क कम्पनीले नियमित रूपले तिर्नुपर्छ । त्यसमा तल माथि पार्नु हुँदैन, यो राजग्राह्य भाग (तिरो) हो ।

१३५. बेमौकामा किनबेच गर्ने व्यापारीले कर उठाउने संस्थालाई छलेमा वा झूटो बयान दिएमा वा परिमाणमा कमबेशी गरेमा उसले जति तिर्नुपर्ने हो, त्यसमा आठ गुणा बढी लिनू ।

१३६. आफ्ना देशमा वाणिज्य व्यवसाय चलाएर बसेका उसका सन्तान वा अंशियार बन्धुहरूलाई भेट्न र यहाँको वाणिज्य परिवेश बुझ्न अतिथिको रूपमा आएका विदेशी व्यापारीलाई उसले आफ्ना बन्धुहरूलाई नभेटेसम्म उसको सुरक्षाको जिम्मेवारी राजाले लिनुपर्छ ।

१३७. उसका सन्तान वा अंशियारहरू मरिसकेका भए उसका नजिकका नातेदारहरूलाई उनलाई सुम्पनू, ती पनि नभए अलि परकै उसका बन्धुहरूलाई सुम्पनू । कोही पनि नभए दश वर्षसम्म त्यस्ता व्यक्तिलाई राजाले गोप्यरूपमा सुरक्षित राखिरहनू ।

१३८. दश वर्षसम्म आफ्नो राष्ट्रमा सपरिवार सुरक्षित रूपमा रहिरहँदा पनि उसको कुनै अभिभावक फेला नपरेमा त्यसपछि राजाले उसलाई आफ्ना अधीनमा लिनू । यसबाट कुनै धर्महानि हुँदैन ।

संभूयोत्थान नामको विवादपद सिद्धियो ।

# दत्ताप्रदानिक प्रकरण

१३९. बेकाइदासँग दिइएको वस्तुलाई जो फेरि फिर्ता लिन चाहन्छ, त्यसलाई दत्ताप्रदानिकनामक व्यवहारपद भनिन्छ ।

१४०. व्यवहारमा दानमार्ग (दिने पद्धति) चार प्रकारको हुन्छ, ती चार प्रकार यी हुन्- (१) दिन नहुने (अदेय) दान (२) दिन हुने (देय) दान (३) दिइसकेको (दत्त) दान (४) दिई नसकेको दिन ठीक गरेको (अदत्त) दान ।

१४१. तिनमा अदेय दान आठ प्रकारको हुन्छ । देय दान एक प्रकारको हुन्छ । दिईसकेको दान सात प्रकारको हुन्छ । नदिएको दान सोह्र प्रकारको हुन्छ ।

१४२. (१) मासिक श्राद्ध वा औंसीका दिन गर्नुपर्ने दशश्राद्धका लागि छुट्ट्याएको धन (२) मागेर प्राप्त गरेको धन (३) अरूले आफूकहाँ बन्धक राख्न ल्याएको धन (४) धेरै जनाको हक लाग्ने साझा धन (५) अरूले आफुकहाँ नासो राखेको धन (६) कुनै काम गर्नका लागि पहिल्यै दिइएको पारिश्रमिक (पूर्वदान) (७) उत्तराधिकारी छँदाछँदैको सर्वस्व (८) अरूलाई दिन कबोल गरेको धन । यी कसैलाई दिन नहुने (अदेय) धन हुन् ।

१४३. आफ्ना जहान, छोरा-छोरी, आमा-बाबु जस्ता कुटुम्बको पालन-पोषण गरेर बचेको धन मात्र (देय) दिन वा दान गर्न सकिने धन

मानिन्छ । पोष्यवर्गको जीवनमा बाधा पुऱ्याएर दान गर्दा दोष (पाप) मात्र हात लाग्छ ।

१४४. (१) पसलमा बेच्न राखेका सामान बेचेर प्राप्त गरेको धन (२) ज्यालादारी गरेर कमाएको धन (३) खुशी भएर दिएको पुरस्कार (४) आफूलाई स्नेह गरेर कसैले दिएको धन (५) उपकारको रूपमा दिएको धन (६) स्त्रीशुल्कको रूपमा दिएको धन (७) कृपा गरेर दिइएको धन- यी सात प्रकारका धनहरू दत्त कहलाउँछन् ।

१४५. (१) दिन इच्छा नभई डरले दिएको (२) रिसले दिएको (३) शोकले दिएको (४) रोगले दिएको (५) उल्का गिरेर दिएको (६) ठट्टा गरेर दिएको (७) झुक्किएर दिएको (८) छलकपट गरी दिन बाध्य गराएर दिएको (९) बालकले दिएको (१०) लाटो मूर्खले दिएको (११) अरूको अधीनमा बसेका परतन्त्र व्यक्तिले दिएको (१२) रक्सी आदिको मात लागेका व्यक्तिले दिएको (१३) पागलले दिएको (१४) यसले मेरो काद गर्देला भन्ने आशाले दिएको (१५) यो व्यक्ति यो दानको उत्तम पात्र हो भनी झुक्क्याएर मूर्खलाई दिलाएको वा उचित पात्रलाई यो पात्रै होइन भनी नालायकलाई दिलाएको र (१६) नजानीकन दिएको- यी १६ प्रकारका अदत्त दान हुन्छन् ।

१४६. जुन व्यक्ति मोहले अदत्त (उक्त १६ प्रकारमध्ये कुनै १ प्रकारको) दान लिन्छ र जो व्यक्ति दिन नहुने दान दिन्छ, ती दुवै (अदेय दान दिने र त्यस्तो दान लिने) दण्डनीय हुन्छन् ।

दत्ताप्रदानिक नामको विवादपद सिद्धियो ।

# अभ्युपेत्याश्रुश्रूषा प्रकरण

१४७. जुन व्यक्ति आजदेखि अमुक मितिसम्म तपाईँको घरमा बसी तपाईँले वा तपाईँका परिवारले लाएअह्राएको काम गरी तपाईँकै सेवा गर्नेछु भन्ने कबोल गरेर ठीकसँग काम दिँदैन, त्यो अभ्युपेत्याशुश्रूषानामक विवादपद कहिन्छ ।

१४८. सेवा गर्ने व्यक्ति (सुश्रूषक) पाँच प्रकारका, कामदार (कर्मकर) चार प्रकारका, कमारा (दास) पन्ध्र प्रकारका हुन्छन् भनी विद्धान्हरूले शास्त्रहरूमा बताएका छन् । शिष्य, अन्तेवासी, भृतक, अधिकर्मकृत् यी सबै कामदार मानिन्छन् । आफ्ना घरमा जन्मिएका दासका सन्तान दास हुन्छन् । यी सबैको साझा धर्म पराइको अधीनमा रहनु (परतन्त्रता) हो भनेर विद्धान्हरू भन्दछन् । उनीहरूको विशेषपन, वृत्ति र जाति कर्मका आधारमा हुन्छ ।

१४९. काम पनि दुई प्रकारका हुन्छन् (१) अशुभ (२) शुभ । कसैको दास बनेर गरिने काम अशुभ कर्म हो । त्यसबाहेक अरू गरिने काम शुभ कर्म हुन् ।

१५०. घरदैलो सफा नराख्नु, सडकमा थुप्रिएको कसिङ्गर नहटाउनु, गुप्ताङ्गहरूको स्पर्श गर्नु, खाना खाएर नचुठी बस्नु, दिसा पिसाब लिनु, छोड्नु, मालिकको अङ्गलाई गुप्ताङ्गले छुनु । यी अशुभ कर्म सम्झनु, यी बाहेक अरू शुभकर्म हुन् ।

१५१. विद्या पढी नसकेसम्म शिष्यले पवित्र भएर गुरुको सेवा गर्नुपर्छ।त्यसैगरी गुरुपत्नी र गुरुपुत्रहरूको पनि सेवा गर्नुपर्छ। गुरुका घरमा रहँदा सधैं ब्रह्मचर्यमा रहनू, भिक्षावृत्ति गर्नू, खाट पलङमा नसुत्नु, जमीनका ओछयान लगाएर सुत्नू, गहना नपहिरनू । गुरुभन्दा पछि सुत्नू र पहिले उठ्नू । गुरुको आज्ञा नपाई लगाएका कामबाट नहट्नू एवं गुरुको अगाडि खडा पनि नहुनू, गुरुको आज्ञा पाएपछि आफ्ना शक्तिले भ्याउने काम अन्यथा नसोची गर्नू । गुरुलाई दिग्दारी नलागेसम्म ठीक पढ्ने समयमा पढ्नू । अध्ययनको आरम्भमा र अन्त्यमा गुरुकै पाउमा शिर राख्नू ।

१५२. गुरुको आदेशअनुसार शिष्यले ठीकसँग काम गर्दैन भने उसलाई मर्का नपर्ने गरी कडा ठोस द्रव्य वा बाँसका लठ्ठीले पिट्नू । किन्तु शिर र छातीजस्ता मर्मस्थान बचाएर हल्कैसँग पिट्नू ज्यादा नपिट्नू । त्यसमा पनि उसलाई आफ्नो अपराध साबित गराई आफूमा उसको विश्वास नगुम्ने गरी बानी सुधारका लागि दण्ड पाइनु उचित हो भन्ने भावना विकसित गर्न राजाले जस्तै गरी गुरुले दण्ड दिनू ।

१५३. अध्ययन पूरा गरेर समावर्तनसंस्कार गरेपछि गुरुलाई दक्षिणा टक्र्याएर आफ्ना घरतर्फ शिष्यले जानू । गुरुले चेलामा र चेलाले गरुमा गर्नुपर्ने शिष्यवृत्ति बताइयो ।

१५४. आफ्ना कुलपरम्परामा चलेको सीपको राम्रो जानकारी प्राप्त गर्न चाहने व्यक्तिले आफ्ना बन्धुहरूको अनुमति लिएर कुनै निश्चित समयभरका लागि गुरुकहाँ बस्नू । यसरी बस्दा गुरुको अन्न उसले खाने गरेको छैन भने उसले चाहेको सीप सिक्नुबाहेक उसलाई अरू कुनै काम नलगाउनू । उसलाई गुरुले आफ्नै छोरालाई जस्तै व्यवहार गर्नू ।

१५५. आफूले चाहेको सीप राम्ररी सिकाउने र कुनै प्रकारको दुष्टता नगर्ने गुरुलाई जुन व्यक्ति बीचमै छोड्छ, त्यस्ता व्यक्तिलाई दण्डरूपी बन्धन दिएर पनि बलजफ्ती बसाउनू ।

१५६. आफूले चाहेको शिल्प-शिक्षा पूरा गरिसकेर पनि आफूले पहिले कबोल गरेअनुसारको समयसम्म ऊ गुरुकहाँ रहँदा सीपको काम गरेर जो धन कमाउँछ, त्यसको हिस्सा गुरुले पनि पाउनुपर्छ ।

१५७. गुरुबाट चाहेको शिल्प शिक्षा र पहिले कबोल गरेअनुसारको समय पनि पूरा गरिसकेका शिष्य गुरुको प्रदक्षिणा गरी शक्तिअनुसार दक्षिणा टक्र्याएर आज्ञा लिई घरतर्फ फिर्न सक्छ ।

१५८. भोजनवृत्ति ज्याला दिएर काम लगाइने व्यक्तिलाई भृत भन्दछन् । भृत तीन प्रकारको बताइएको छ- (१) उत्तम (२) मध्यम (३) अधम । उसले गरिदिएका कामको बदलामा उसलाई दिइने ज्याला पनि उसको काम गर्ने सामर्थ्य र उसको आहारअनुरूपको हुन्छ । अर्थात् उसमा काम गर्ने शक्ति कम र

भोजनशक्ति बढी भए कम तलब पाउँछ । कार्यशक्ति बढी भोजनशक्ति कम भए बढी तलब पाउँछ ।

१५९. ज्यालामा काम गर्ने व्यक्ति (भृत) जो हतियार चलाउने काम गर्छ, त्यो उत्तम मानिन्छ। खेतीपातीको काम गर्ने ज्यालादार मझौलो मानिन्छ।मानिस बोक्ने काम गर्ने ज्यालादार अधम मानिन्छ।यसरी ज्यालादारी गर्ने (भृत) हरू तीन प्रकारका भए।

१६०. आर्थिक अधिकार दिएको ज्यालादार अधिकर्मकर भनिन्छ । यो अधिकर्मकर पारिवारिक र कार्यालयसम्बन्धी आर्थिक लेखा राख्ने हुनाले दुई प्रकारको हुन्छ । यो अधिकर्मकर र पहिले बताइएका तीन प्रकारका भृतहरूसमेत जम्मा चार प्रकारका भए । यी चारबाहेक पन्ध्र प्रकारका बाँकी भृतहरूचाहिँ दास भनिन्छन् ।

१६१. (१) आफ्नै घरका दासदासीबाट जन्मिएको (२) किनेको (३) दान पाएको (४) अंशमा पाएको (५) अनिकालको समयमा अन्न दिएर बचाएको (६) मालिकद्वारा बन्धकी राखिएको (७) ठूलो ऋणबाट छुटाएको (८) युद्धमा जितेर समातिएको (९) पण(कबोल) मा जितेको (१०) म तपाईंको दास भएँ भनेर आएको (११) सन्यासको नियममा रहन नसकी त्यताबाट गृहस्थ बन्न ति फर्किएको (१२) केही काल दास बन्न आएको (१३) भाते (१४) मालिकका घरमा आफ्नुलायक कमारी देखेर लहसिएको (१५) रुपैयाँ लिएर आफूलाई बेचेको- यी पन्ध्र प्रकारका दासहरू शास्त्रमा कहिएका छन् ।

१६२. तिनमा पहिला चार प्रकारका व्यक्तिहरू मालिकको असावधानीले दासका लहरमा गनिन पुगेका मात्र हुन्, त्यस कारण यी स्वतः छुट्छन् ।

१६३. बाँकी प्रकारका दासहरूमध्ये कुनै पनि दासले प्राण सङ्कटमा परेका आफ्ना मालिकलाई त्यस सङ्कटबाट बचायो भने त्यो व्यक्ति त्यस मालिकको दासत्वबाट छुट्कारा पाउँछ साथै मालिकको छोरैसरह अंश पनि पाउँछ ।

१६४. समयमा खान नपाउँदा खाना दिएर दास गराएको व्यक्तिले आफूलाई दास बनाउने मालिकलाई एक गाई र एक गोरू दिएर उनको दासत्वबाट आफूलाई छुटाउन सक्छ । परन्तु अनिकालका बेला अन्न दिएर बचाइदिने व्यक्तिका दासत्वबाट ऊ आफूलाई छुटाउन सक्तैन ।

१६५. अर्काले जीउ बन्धकमा राखेको व्यक्तिलाई उसको त्यसमा परेको धन फिर्ता दिएर कुनै मालिकले उसको उद्धार गरिदियो भने त्यस उद्धारकर्ताले त्यस व्यक्तिबाट काम लिन हुन्छ, किनभने त्यो व्यक्ति क्रीत दासभन्दा केही मात्र फरक भयो ।

१६६. साहुको ऋण तिर्न नसकेर उसको दास बन्न पुगेको व्यक्ति त्यस साहुको साँवा ब्याज हिसाबले भेटेसम्म पूरा चुक्ता गरिदिएर त्यसको दासत्वबाट छुट्कारा पाउँछ । तोकेको समयभर काम दिने कबोल गरेर दासता स्वीकारेको व्यक्ति समयभर काम गरेपछि त्यसबाट छुट्कारा पाउँछ ।

१६७.	म तपाईंका शरणमा परें भनी शरण पर्न आएको वा युद्धमा जितेर बन्दी बनाएर ल्याएको वा पण (होड) मा हारेको व्यक्ति ज्यान माया मारेर समर्पित हुनपर्ने जोखिमको काममा मालिकलाई सघाएर त्यसको दासत्वबाट छुट्कारा पाउँछ ।

१६८.	पहिले सन्यास लिएर त्यसका नियममा रहन नसकी गृहस्थाश्रमतिर फर्किएका व्यक्तिले राजाकै दासता गर्नू, अरूको नगर्नू । त्यस्तो आश्रमधर्मभ्रष्ट व्यक्ति दासत्वबाट कहिल्यै छुट्न सक्तैन, विशुद्ध पनि कहिल्यै हुँदैन ।

१६९.	पारिश्रमिक केही नदिई केवल भोजनमात्र दिएर काम लगाएको दासलाई भक्तदास भन्दछन् । यस्तो भक्तदास जतिवेला छुट्न चाहन्छ, त्यतिवेला नै तुरुन्त छुट्छ । कमारीसँग पछि लागेर आएको कमारा कमारी छुटेपछि स्वतः छुट्छ ।

१७०.	कमारीको पछि लागेर आएको कमारो, कमारी छुटेपछि स्वतः छुट्छ ।

१७१.	कुनै स्वाधीन तर नीच प्रकृतिका व्यक्तिले आफ्नो जीउ जमानी राखेर साहूको धन खाए मासेमा त्यो त्यसको जन्मदास हुन्छ ।

१७२.	चोरले अपहरण गरेका र तिनीहरूद्वारा बेचिएका कारणले कसैको दास हुन पुगेका व्यक्तिहरूलाई र बलपूर्वक जबर्जस्ती दास बनाएका व्यक्तिहरूलाई राजाले सामूहिक रूपमा कानून बनाई छुटाइदिनू, तिनीहरूमा दासत्व रहँदैन ।

१७३.	वर्ण प्रतिलोम हुँदैमा दास बनाउन पाइँदैन । आफ्नो धर्मलाई छोड्नेले स्त्रीले जस्तै दासत्व सहनुपर्छ ।

१७४.	अर्काका अधिनमा रहेका व्यक्तिले म तपाईंका शरणमा परें मेरो उद्धार गरिदिनुहोस् भनेर अर्का व्यक्तिसँग अनुरोध गरेमा त्यो दोस्रा व्यक्तिले त्यसलाई उसका पहिला मालिकबाट छुटाउन पाउँदैन त्यो पहिलेकै मालिकको हुन्छ ।

१७५.	यस दुनियाँमा तीनथरी व्यक्तिहरू निर्धन हुन्छन् । ती हुन्- पत्नी, दास र छोरो । यी तीन थरी व्यक्तिहरूले जो धन प्राप्त गर्दछन्, त्यो धन ती व्यक्ति जसका हुन्, त्यसकै हुन्छ ।

१७६.	जुन व्यक्ति आफ्नो दासलाई आफ्नो दासताबाट प्रसन्न मनले छुटकारा दिन चाहन्छ, त्यसले दासका काँधबाट भरी पानी भएको घडा लिएर पानीसमेत नै जमीनमा छोडी फुटाइदिनू र फूल अक्षताले त्यस दासको शिरमा पर्सिएर तीन पल्ट आजदेखि तिमी मेरो दासताबाट छुट्यौ भनी पूर्वतर्फ फर्काएर त्यसलाई छोडिदिनू ।

अभ्युपेत्याश्रुश्रूषा नामको पाँचौं व्यवहारपद सिद्धियो ।

# बेतनस्यानपाकर्म प्रकरण

१७७. तलब दिने गरी काम लगाएका व्यक्तिले उचित काम नदिएमा तलब दिने नदिने विधिबारेको मुद्दालाई बेतनस्यानपाकर्म भन्दछन् ।

१७८. काम लगाउने मालिकले तलबमा काम लगाएका व्यक्तिलाई कामको शुरूमा वा बिचमा वा अन्त्यमा यति दिने भनी निधो गरेको पारिश्रमिक दिएर छोड्नुपर्छ ।

१७९. यति दिने भन्ने किटान नगरी काममा लगाएको भए वा व्यापारमा काम लगाएको भए नाफाको दश भागको एक भाग, पशुपालनमा भए उसले बढाएका पशुको १/१० र खेतीमा भए पनि उब्जनीको १/१० कामदारलाई दिनुपर्छ ।

१८०. काम लगाउने व्यक्तिले काम गर्ने व्यक्तिलाई त्यो काम सम्पन्न गराउन आवश्यक पर्ने सबै उपकरणहरू उपलब्ध गराउनुपर्छ र उसले त्यो (पारिश्रमिकमा) गर्नुपर्ने प्रत्येक कामको किटान पनि पहिल्यै गर्नुपर्छ । बीचमा तिमी हाम्रै मान्छे त होउनि यति पनि सकिदिएर गए त भइगयो इत्यादि भनेर बढी काम लगाउने गर्न हुँदैन ।

१८१. काम गराउने व्यक्तिले कुनै पनि हालतमा तिमीले यो काम यति समयभित्र गरिदिनैपर्‍यो भनेर बलजफ्ती काम लगाएमा र गर्नेले

उक्त समयभित्र काम गर्ने कबोल गरेमा त्यस कामको दुई गुना पारिश्रमिक दिनू ।

१८२. कामदारले आफूले कबोल गरेका समयभित्र कबोलेको काम पूरा गर्नुपर्छ, नत्र त्यसले पारिश्रमिक पाउँदैन । काम लगाउने मालिकका दोषले अधुरो काम छोड्नुपरेमा गरे जति कामको पारिश्रमिक पाउँछ ।

१८३. दुई जनाले बोक्ने उचाल्ने काम भागशान्ति पारिश्रमिक दिने गरी लगाएकोमा बीच बाटामा पुगेर कारणवश एउटाले छोडेमा त्यसले पारिश्रमिकको १/६ भाग छाड्नुपर्छ । मालिकले एउटालाई छोडाएमा उसले पाउने पूरा पारिश्रमिक दिनुपर्छ । नदिएमा ब्याजसमेत दिलाउनू ।

१८४. बेकाइदासँग बोकेर माल नोक्सान गराएमा भरियाले पारिश्रमिक पाउँदैन, उल्टा पारिश्रमिकको दुइ गुना दण्ड हुन्छ ।

१८५. भरियाको गल्तीले मालसामान नष्ट हुन गएमा दैव र राजाको शासनअनुसार नष्ट भएकोमा बाहेक त्यो नष्ट भएको सामान उसैलाई तिराउनू ।

१८६. प्रत्येक एक- एक वर्षमा नवीकरण गर्ने गरी एक सय गाई हेरिदिएको पारिश्रमिक गाईको गउँत, गोबर र प्रत्येक आठौं दिनको पूरा दूध र एउटा कोरली बाच्छी हेर्नेको पारिश्रमिक हुन्छ । एवं एक वर्षसम्म दुई सय गाई हेरिदिएको पारिश्रमिक

पूर्वोक्त अरू सबै कायम राखी कोरली बाच्छीका ठाउँमा लैनु गाई दिनुपर्छ ।

१८७. अरूका गाई हेरिदिने गोठालाले प्रत्येक दिन बिहान उज्यालो भएपछि गाई चराउन लगेर चराई पानी पियाएर बेलुकीपख फिर्ता ल्याउनुपर्छ ।

१८८. गोठालाले रोगव्याध, हिंस्रक जन्तुको आक्रमण आदिबाट गोधनको सुरक्षा आफैंले गर्न सके बेस । त्यसो गर्न सकेन र गोधनको नोक्सान हुन गएमा उसले तुरुन्त आएर गाईको मालिकलाई त्यसको सूचना दिनुपर्छ ।

१८९. गोठालाले गोधनको रक्षा गर्न पनि सकेन, ब्वाँसा आदिले आक्रमण गर्दा चिच्याएर अरूसँग गुहार पनि मागेन, नोक्सान भएमा गोधनको तत्काल मालिकलाई सूचना पनि गरेन भने त्यस्तो नोक्सान भएका गोधनको क्षतिपूर्ति उसैले बेहोर्नुपर्छ । त्यसमा अपराधी उही हो ।

१९०. समयमा उपचार नगरी घाउचोटमा कीरापरी मरेको, गोठालाले कुटेर मारेको, भीर, पहरो, खोलाहरूमा परी मरेको र बचाउने कुनै प्रयास नगरी उपेक्षा गरी मर्न दिएको गोधनको क्षतिपूर्ति पनि गोठालाबाटै गराउनू ।

१९१. लामालामा रौंहरू, चमरहरू, स्नायु र गोलोचनजस्ता सबै कुराहरू जसका पशु हुन्, उसैलाई बुझाउनू । पशु मरेमा त्यसको चिनु पनि पशुका मालिकलाई देखाउनू ।

१९२. बोका, बाख्रा, खसी र भेडाहरूलाई किनबेचका लागि कुनै स्थानविशेषमा रोकेर राखेको अवस्थामा गोठालाका असावधानीले ब्वाँसाले उफ्रेर आई कुनैलाई जबरजस्ती मारेमा त्यसको जवाफदेही गोठालाको हुन्छ ।

१९३. स्वच्छन्दरूपमा चर्नको लागि वनमा छोडिएका भेडा, बाख्रा, खसी र बोकाहरू चरिरहेको मौकामा एकाएक टपकिएर ब्वाँसाले कुनैलाई मारेमा पनि गोठालाकै गल्ती मानिन्छ ।

१९४. चरिरहेका बथानबाट हामी यतिवटा खसी वा भेडा लिन्छौं कसैको तागत भए रोक भनी हाँक दिएर डाँकाहरूले जबरजस्ती खसी वा भेडा लिन लाग्दा गोठालाले यी फलाना मालिकका हुन् मेरा होइनन्, उहाँलाई भनेर लिनुहोस् म गरीबलाई दण्ड नदिलाउनुहोस् भनी अनुरोध गर्दा पनि नटेरी लिएमा त्यसको क्षतिपूर्ति गोठालाले बेहोर्नुपर्दैन ।

१९५. यस किसिमले सबै प्रकारका गोठलाहरुका नियमहरू बताइए। पशुहरू मरेमा मालिकलाई यिनका चिह्न देखाइदिएपछि गोठालाहरूले छुट्कारा पाउँछन् ।

१९६. वेश्या स्त्रीले भोग-शुल्क लिएर सहवास गर्न नदिएमा उसले दोबर शुल्क फिर्ता गर्नुपर्छ तथा यति शुल्क दिने भनी कुनै स्त्रीलाई भोगेर भनेबमोजिम शुल्क नदिने पुरुषले पनि दोबर शुल्क दिनुपर्छ ।

१९७. अर्काका जग्गामा अस्थायी घर बनाएर वा झुप्रो हालेर जो बस्छ, त्यसलाई घरधनीले निकालेका खण्डमा आफ्ना सरसामान लिएर निस्कन पाउँछ वा धेरै काल बसेको भए बसुञ्ज्यालको भाडाको रूपमा त्यो सबै त्यहीँ छोडेर जानू । घरधनीकै सरसामग्रीले बास खडा गरी बसेको भए त्यसमा उसका उपयोगले थोत्रिएका वा टुटेफुटेका सामग्रीको क्षतिपूर्ति दिएर वा अरू सामान नै ल्याइदिएर जानू ।

बेतनस्यानपाकर्म नामको छैटौं व्यवहारपद सिद्धियो ।

# अस्वामिविक्रयनामक प्रकरण

१९८. नासो राखेको पराइको सम्पत्ति वा हराएको प्राप्त गर्ने कोशिश जारी रहेको पराइको सम्पत्ति वा स्वयंले अपहरण गरेको पराइको सम्पत्ति उसका रोहवरमै उसले देख्दादेख्दै जो बेचिन्छ, त्यसलाई छोटकरीमा अस्वामिविक्रय भन्छन् ।

१९९. आफ्ना हकको माल आफ्नो इच्छाविरूद्ध कसैले बेचेको रहेछ र मालिकले फेला पारेछ भने उसैको हुन्छ, किन्नेवाला ठगिन्छ । त्यो पनि देख्ने साक्षीका रोहवरमा किनेको भए किन्नेवाला चोर ठहर्दैन । एकान्तमा सट्याकसुटुक किनेको भए किन्नेवाला चोर ठहर्छ ।

२००. मालिकले बेच्ने अनुमति नदिइएका नोकरबाट र गलत विचार भएका व्यक्तिबाट एकान्तमा बेमौकामा कम मूल्य दिएर किन्ने व्यक्ति उक्त दोषको भागी हुन्छ ।

२०१. किन्ने व्यक्तिलाई यो वस्तु, तिमीले कहाँबाट कसरी प्राप्त गऱ्यौ ? भनी सोध्दा उसले त्यो वस्तु स्वयं प्राप्त गर्दाका सबै तथ्य कुराहरू नलुकाई बताएमा ऊ निर्दोष ठहर्छ । नत्र त्यो किन्ने व्यक्ति पनि बेच्ने व्यक्तिसरह दोषी ठहर्छ र त्यसबाट पनि चोरी गर्ने व्यक्तिबाट झैं दण्ड असूलउपर गर्नुपर्छ ।

२०२. यस कारण विनामालिक मालिकका नाममा अरूहरूद्वारा बनाइएको दास र बिक्री गरिएको विक्रेय वस्तु दुवै दास

नबनाएसरह र विक्रेय वस्तु बिक्री नगरेसरह मानिन्छन्, यो मर्यादा व्यवहारमा कायमै छ ।

२०३. यसरी विनामालिक कसैद्वारा अरूका हकको चल अचल सम्पत्ति बिक्री गरिँदा विक्रेताले बेचिएको वस्तुको पूरा मूल्य त्यसको मालिकलाई दिनुपर्छ । किन्ने व्यक्तिलाई पनि मालिकलाई दिएबराबर नै दिनुपर्छ र सरकारलाई उसको कानूनअनुसारको राजस्व पनि बुझाउनुपर्छ ।

२०४. अरूले राखेको गाढधन कसैले फेला पारेमा त्यसलाई राजकोषमा दाखिल गराउनुपर्छ, किनभने ब्राह्मणको सम्पत्तिबाहेक अरू सबैको भूमिगत द्रव्य र खानिबाट निकालिने धन राजकीय कोषमा दाखिल गरिने हुन्छ ।

२०५. आफ्नै हराएको धन पनि त्यसरी फेला परेमा मेरो अमुक मितिमा यो धन हराएको थियो, भूमिगत रहेछ, सरकारमा जाहेर गरी लिँदैछु भनेर राजालाई अवगत गराई लिनू । यसो गरेमा त्यो धन पवित्र हुन्छ, अन्यथा अपवित्र हुन्छ ।

२०६. ब्राह्मणले पनि खानि वा गाढधन प्राप्त गरेमा तुरुन्त राजामा निवेदन गर्नू र राजाले दिएमा लिनू, अन्यथा गरेमा उनी पनि चोर ठहर्छन् ।

अस्वामिविक्रयनामक सातौं व्यवहारपद पूरा भयो ।

# विक्रीयासंप्रदान प्रकरण

२०७. बिक्रीका लागि पसलमा राखिएको सामान मूल्य लिएर बेचिसकेपछि पनि सो सामान किन्नेलाई उपलब्ध गराइन्न भने त्यो विक्रीयासंप्रदानामक विवादपद हुन्छ ।

२०८. किनबेचको काममा अचल (स्थावर) र चल (जङ्गम) यी दुई प्रकारका द्रव्यहरू व्यवहारमा ल्याइन्छन् । यसरी किनबेचको काममा ल्याइने सबै प्रकारको द्रव्य पण्य कहलाउँछ ।

२०९. त्यो बेचिने (पण्य) द्रव्य किन्नेलाई उपलब्ध गराउने नगराउने विभिन्न ६ प्रकारको हुन्छ भनेर विद्वान्हरूले भनेका छन् । ती ६ प्रकारका हुन्- (१) गनेर दिइने सुपारी कौडी आदि (२) तौलिएर दिइने सुन चाँदी ओषधि आदि (३) नापेर दिइने तेल घिउ कपडा आदि (४) काम हेरेर दिनुपर्ने भारी बोक्ने आदि (५) रूपअनुसार मूल्य तल-माथि गरिने वेश्या स्त्री आदि (६) चमकका आधारमा मूल्य निर्धारित हुने रत्न आदि ।

२१०. बिक्रीका लागि पसलमा राखेको सामान मूल्य लिएर बेचिसकेपछि विक्रेताले किन्ने व्यक्तिलाई सामान उपलब्ध गराउँदैन भने त्यसलाई अचल सामानको ब्याज र नोक्सानी भराउनू, चल द्रव्यको पारिश्रमिक वा ब्याज आदि भराउनू । बेचिएको द्रव्य बेचेका समयका भन्दा क्रेताले लिने समयमा आधा घटेको रहेछ भने त्यसको पूरा हर्जाना र ब्याज विक्रेताले दिनुपर्छ । यो अचल

द्रव्यको नियम हो । गाई भैंसी जस्ता चल द्रव्य भए ब्याज अर्थात् बाच्छो पाडो र दूधको मूल्य दिनुपर्छ ।

२११. मूल्य लिएर विक्री गरेको चल अचल वस्तु क्रेतालाई उपलब्ध नगराई राख्दा त्यो नासियो जल्यो चोरियो भने त्यसको हर्जाना माल बेचेर पनि क्रेतालाई सो माल उपलब्ध नगराउने विक्रेताले नै बेहोर्नुपर्छ ।

२१२. बिक्री गर्ने व्यक्तिले किन्नेलाई असल सामान देखाएर उसबाट मूल्य असूल गर्छ र सामान दिने बेलामा कमसल सामान भिडाएर क्रेतालाई ठग्छ भने त्यस्ता विक्रेताबाट क्रेतालाई दोबर मूल्य भराइदिनू र त्यत्ति नै जरीवाना पनि गर्नू ।

२१३. विक्रेताले एउटाका हातमा सामान बेचेर वा उसबाट मूल्य चुक्ता बुझेर अर्कोका हातमा सामान दिन्छ भने त्यस्ता विक्रेतालाई पनि मूल्यको दोबर हर्जाना तिराउनू । त्यति नै दण्ड पनि गर्नू ।

२१४. किन्ने व्यक्तिले मूल्य चुक्ता गरिसकेको सामान विक्रेताले तिम्रो सामान उठाऊ यहाँ नराख भन्दा पनि त्यहीं छोडेर जान्छ र विक्रेताले त्यो सामान अन्यत्रै बेचिदिन्छ भने उसले पहिला क्रेताको मूल्य फिर्ता नगरेमात्र ऊ दोषी ठहर्छ । मूल्य चुक्ता गरेका सामानका बारेमा यो नियम भयो । मूल्य चुक्ता नगरेको किन्तु क्रेताले यो सामानको आवश्यकता मलाई परेको छ, अन्यत्र नबेची मलाई राखिदिनु मात्र भनेको मूल्य चुक्ता नगरेको

सामान केही समयपछि विक्रेताले अन्यत्र बेचिदिएमा उसको केहि दोष हुँदैन ।

२१५. सम्पूर्ण बिक्रीका सामानहरूमा व्यापारीहरूले किनबेच गर्ने फाइदैका लागि हो । त्यो फाइदा मौकाअनुसार कहिले धेरै हुन्छ, कहिले थोरै हुन्छ, कहिले हुँदैहुँदैन । त्यस कारण बनियाँले देशकालअनुसार आफ्ना सामानको मूल्य ठीक राख्नू, कुटिल व्यवहारमा नलाग्नू । यसो गरेमा व्यापारको मार्ग प्रशस्त हुन्छ र सबैको विश्वास प्राप्त हुन्छ ।

विक्रीयासंप्रदान नामको आठौं व्यवहारपद सिद्धियो ।

# कीत्वानुशय प्रकरण

२१६. जुन व्यक्ति बेच्न राखिएको पसलको सामान मूल्य चुक्ता गरी किनिल्याएपछि त्यसको समुचित कदर गर्दैन, उसमा आफू ठगिएको महसूस हुन्छ, त्यहाँ क्रीत्वानुशयनामक विवादको ठाउँ खडा हुन्छ भनिन्छ ।

२१७. बेच्न राखिएको पसलको सामान किनिसकेपछि जुन क्रेता गलत किनेको ठान्छ, त्यसले त्यो सामान खराब नहुँदै त्यसै दिन बेच्ने व्यक्तिकहाँ फर्काइदिनुपर्छ ।

२१८. क्रेताले सामान किनेको दोस्रो दिन विक्रेताकहाँ फिर्ता लग्यो भने त्यसले जति मूल्यको सामान किनेको छ, त्यसको ३० भाग कट्टी गरेर तेस्रो दिनमा लगेमा ६० भाग कट्टी गरेर फिर्ता गर्नुपर्छ । तेस्रो दिनपछि लगेमा फिर्ता गर्ने नगर्नेमा विक्रेताकै मर्जी हुन्छ ।

२१९. क्रेताले गुण र दोषका दृष्टिले पहिल्यै सामानको राम्ररी परीक्षा गर्नुपर्छ । यसरी पहिल्यै ठीक ठह-याएर किनेको सामान पसलेलाई पछि फिर्ता गर्न मिल्दैन । त्यसलाई क्रेताले नै बेहोर्नुपर्छ ।

२२०. लैना वस्तुको परीक्षा ३ दिनमा गर्नू । घोडा आदि सवारीहरूको परीक्षा ५ दिनमा गर्नू । मोती हीरा मुगाहरूको परीक्षा ७ दिनमा गर्नू । पुरुषको परीक्षा एक पक्ष (१५ दिन) मा गर्नू । स्त्रीको परीक्षा त्यसको दुईगुना अर्थात् ३० दिनमा गर्नू । सबै प्रकारका

बीजहरूको परीक्षणकाल १० दिनको हुन्छ । धातु र कपडाहरूको परीक्षणकाल एक दिनको हुन्छ ।

२२१. क्रेताले उपभोग गरेर विरूप गराएको वा मैल्याएको कपडा दोषयुक्त भएता पनि दोकानदारलाई फिर्ता गर्न मिल्दैन ।

२२२. पसलबाट खरीद गरी ल्याएको कपडा एकपल्ट धोएर फिर्ता गऱ्यो भने त्यसको ८ भागको १ भाग मूल्य कम हुन्छ । दुइ पल्ट धोइएको भए पूरा मूल्यको १/४ मूल्य कम हुन्छ । तीन पल्ट धोइएको भए १/३ मूल्य घट्छ । चारपल्ट धोइएको भए आधा दामको हुन्छ । यसभन्दा पछि जति-जति पल्ट कपडा धोइएको हुन्छ, त्यति त्यति एक-एक चौथाइका दरले त्यसको मूल्य घट्तै जान्छ । जब कपडाको किनारा फाट्छ, तब त्यो जीर्ण (थोत्रो) कहलाउँछ । जीर्ण कपडा जतिखेर पनि नासिन सक्छ ।

२२३. सम्पूर्ण धातुका भाँडाहरूलाई उपयोगलायक बनाउन फेरि अग्निसंस्कार गर्नुपर्छ । अग्निमा राखेर सफाइ गर्दा ती धातुका भाँडाहरू केही अंशमा घटेका देखिन्छन् । सुवर्ण धातु घट्दैन, चाँदीमा १०० पलमा २ पल अर्थात् सयकडा दुई घट्छ, एवं लाहा र शिशामा १०० मा ८ पल घट्छ । तामामा १०० मा ५ पल घट्छ । एवं ती धातुहरूका विकृतिबाट बनेका भाँडाहरूमा पनि यही नियम लागू हुन्छ । यी धातुहरू एक अर्कामा मिलेर विभिन्न भाँडाहरू बन्ने वा यी धातुहरूका मिश्रणबाट नयाँ धातुहरू बन्ने हुनाले त्यस्ता मिश्रित धातु वा त्यस्ता धातुका

भाँडाहरूको कमी (क्षय) को नियम हुँदैन । धागाबाट बन्ने पदार्थको पनि सफाइमा घट्ने बढ्ने हुन्छ । कपास र ऊनबाट बन्ने धागाद्वारा तयार गरिने सामानमा १०० मा १० पल वृद्धि हुन्छ । मझौला धागाबाट बनेका पदार्थमा धागाको तौलभन्दा ५ पल तौल बढी बृद्धि हुन्छ । मिहीन धागाबाट बनेका सामानमा तौलभन्दा २ पल तौल बढी हुन्छ । रौँबाट बनेका तयारी सामानमा धागाको तौलभन्दा तीसौं भाग (३० भागको १ भाग) कम हुन्छ । कीराका गूडँबाट बन्ने सामानमा र बोक्राका रेसाबाट बन्ने पाट आदिका सामानमा धागाको तौलबराबर तयारी सामानको तौल हुन्छ । घटी बढी हुँदैन ।

२२४. विक्रेय वस्तुको लेनदेनमा कुशल व्यापारीले किनबेच गरेसकेका वस्तुमा पछुतो नगर्नू । किन्तु कुनकुन सामानबाट के कति नाफा वा नोक्सान भयो भन्ने कुरा र बिक्रीको सामान कसरी कति परी आइरहेछ भन्ने कुरा ख्याल गर्नू ।

कीत्वानुशय नामको नवौं व्यवहारपद समाप्त भयो ।

# समयस्यानपाकर्म प्रकरण

२२५. पाखण्डी, समूहमा मिलेर व्यापार गर्ने व्यापारीले आफ्ने व्यवहार चलाउन जुन नियम बाँद्धछन्, त्यो समय कहिन्छ । त्यसलाई उल्लङ्घन गरेमा समयस्यानपाकर्मनामक विवादपद हुन्छ ।

२२६. मुलमुकमा किल्लादुर्गहरूमा पाखण्डीहरूको समूहमा व्यापारीहरूमा समूहहरूमा एवं आफ्नो उन्नतिका लागि मिलेर काम गर्ने समूहहरूमा राजाले उनीहरूका प्रतिज्ञाको वा सिद्धान्तको ठीकसँग परिपालन गराउनुपर्छ एवं यस्ता समूहका सदस्यहरूका धर्मकर्म, उपस्थान-विधि, जागिर, जीविकाका कुरा पनि राजाबाट स्वीकृत नै हुनुपर्छ ।

२२७. त्यसमा राजाको प्रतिकूल पर्ने दुनियाँले बिलकूल नै नरुचाएको र आर्थिक स्रोतहरूमा बाधा पुऱ्याउने कुराहरू पर्न आएमा त्यस्ता कुराबाट राजाले समूहका सदस्यहरूलाई रोक्नुपर्छ । यस्ता समूहका सदस्यहरूले आआफ्नो सगंठन बनाएर एकले अर्काको हानिनोक्सानी गर्ने गरेमा र हतियार उठाएमा एवं आ-आफूमै परस्परको विनाश गर्न तम्सिएमा त्यसबाट पनि तिनलाई हटाउनुपर्छ । उनीहरूको क्रियाकलाप सहिरहन हुँदैन ।

२२८. सगंठित भएर समूहमा काम गर्ने व्यक्तिहरूमा जुन नीच व्यक्तिहरूले फुट पैदा गरिदिन्छन्, तिनीहरूलाई राजाले विशेषरूपमा दण्ड दिनुपर्छ । ठीक समयमा तिनको उपेक्षा भयो

भने उचित समयमा उपचार नगरी उपेक्षा गरिएका रोगहरूले झैं तिनले पछि ठूलो भय उत्पन्न गराउँछन् । शास्त्रले कर्तव्यको रूपमा नबताएको दोषयुक्त क्रियाकलाप कम्पनीमा चल्न लागेको वा चलिसकेको भए तापनि आफ्नो कल्याण चाहने राजाले त्यस्तो क्रियाकलापलाई निश्चितरूपमा रोक्नैपर्छ ।

२२९. शास्त्रीय पुठ नभएको दोषयुक्त क्रियाकलाप चलिसकेको भए पनि आफ्नो हित चाहने राजाले त्यसलाई रोक्नैपर्छ ।

समयस्यानपाकर्म नाउँको दशौं व्यवहारपद समाप्त भयो ।

# क्षेत्रसीमाविवादपद प्रकरण

२३०. पुल र कृषि क्षेत्रका अनिर्णीत सीमानिर्धारणको सम्बन्धमा उठ्ने विवादलाई क्षेत्रजविवाद भनिन्छ ।

२३१. राज्यक्षेत्रको सीमासम्बन्धी वा खेतको साँधसीमासम्बन्धी विवादमा सामन्तहरूबाट निर्णय लिनुपर्छ । शहरका मुख्य साहूहरू, गाउँका मुखियाहरू, धेरैथरी व्यक्तिहरू मिलेर एक लक्ष्य प्राप्तिका लागि एकसाथ काम गर्ने समूहका मालिकहरू अरू प्रमुख भलादमीहरू र बूढापाकाहरूका माध्यमबाट समाजले सीमा छुट्टयाउनुपर्छ ।

२३२. ग्रामीण क्षेत्रका सीमासम्बन्धी विवादमा विवादग्रस्त क्षेत्रभन्दा बाहिरका कृषकहरू, गोठालाहरू, चरा मार्ने शिकारीहरू र अरू यस्तै वनजीवीहरूलाई विवादग्रस्त क्षेत्रको यथार्थ लक्षण बताएपछि त्यसै लक्षणबाट तिनीहरू त्यस भू-भागको अनुमान गर्दछन् । भुस, अङ्गार, फुटेका गाग्राका खवटा, इनार, घरका बगैंचामा सजाइने खालका रूखहरू, घरका जगहरू, धमिराले गोलो लगाइने अग्ला होचा जमीनका परिचित भागहरू आदिद्वारा साँधसीमा छुट्टयाउनुपर्छ । खेत, बगैंचा, सडक, पुराना पुल-बाँध, नदीले छोडिदिएका जमीनका भाग बगर बाटाघाटा र पुराना बाँध पुल आदिद्वारा साँधसिमाना छुट्टयाउनुपर्छ ।

२३३. नदीले बगाएर छोडेका पुरानो चिह्न केही बाँकी नरहेका जमीनहरूमा पुरानो भोग जनाउने प्रमाणहरू र त्यस स्थानको भौगोलिक अवस्थितिबाट हुने अनुमानद्वारा साँधसीमा छुट्याउनुपर्छ ।

२३४. साँधसीमा निर्धारण गर्दा सामन्तहरूले झूटो बोलेको वा व्यवहार गरेको प्रमाणित भएमा राजाले ती प्रत्येक सामन्तहरूलाई अलग-अलग मध्यमसाहस दण्ड गर्नू । जग्गा आदिको विषयमा प्रामाणिक मानिएका गणवृद्धहरूले पनि झूटो बोलेमा तिनलाई छुट्टाछुट्टै प्रथमसाहस दण्ड गर्नू ।

२३५. यथार्थ जानकारी भएमा व्यक्तिले पनि साँधसीमा छुट्ट्याउने काम एक्लै नगर्नू । किनभने यो काम निकै महत्त्वपूर्ण हो र यसको उत्तरदायित्व धेरैमा रहेको हुनुपर्छ । एक्लै सीमा छुट्ट्याउनैपर्‍यो भने त्यस्ता सीमाविभाजक व्यक्तिले उपवास गरी सावधान भएर रातो कपडा र रातै माला पहिरिएर शिरमा अलिकति माटो राखेर सीमा निर्धारण गर्नू ।

२३६. सीमाका जानकारहरू कोही छैनन्, जमीनको लक्षण कस्तो थियो त्यको पनि पत्तो छैन भने दुईथरी झगडियालाई रोहबरमा राखेर राजाले इच्छाअनुसार स्वयं सीमा निर्धारण गरिदिनू । उनीहरूले त्यसैलाई प्रमाणित मान्नुपर्छ ।

२३७. घर, बगैंचा, पानीघाट र आसपासमा जमीनहरू एवं एक अर्को गाउँको सीमा छुट्टयाउँदा पनि यसै विधिलाई प्रयोगमा ल्याउनुपर्छ ।

२३८. कसिङ्गर थुप्प्राउने स्थानको खाल्टो र शहर गाउँको फोहर पानी बग्ने निकास आदिले चौबाटो, देवताको मन्दिर र सडकहरूमा अवरोध ल्याउन हुँदैन ।

२३९. गाउँ, शहर वा राष्ट्रमै अनाज आदि अत्यावश्यक वस्तु घटेर आपत् परेमा अरूका जमीनको बीचबाट ल्याइने कुलो बाँध रोकिंदैन । परन्तु सो कुलो बाँधसम्बन्धी जमीनको मालिकलाई थोरै बाधा पुऱ्याउने र बाधाको अपेक्षा धेरै गुणा बढी फाइदा दिने र धेरैलाई आवश्यक परेको हुनुपर्छ ।

२४०. बाँध दुई प्रकारका हुन्छन्- (१) खेय (२) बद्धय । पानी चलाउनको लागि बनाइने बाँधलाई खेय भन्दछन् । बढी भएको पानी नियन्त्रण गर्न बनाइने बाँधलाई 'बद्धय' भन्दछन् ।

२४१. पानी हुँदै नभएमा अनाज नष्ट हुन्छ, बढी भएमा पनि नासिन्छ नै।त्यस कारण पानी हुँदै नहुनु र ज्यादा हुनु दुवैमा दोष हुन्छ भन्ने मानिएको छ ।

२४२. पहिलेदेखि चालू रहेको वा बिग्रन लागेको पुल, बाँध वा कुलोको नवीकरण वा जीर्णोद्धार गर्न कसैले चाहेमा उसका मालिकलाई सोधी अनुमति लिएर गर्नुपर्छ । अन्यथा त्यसको फल उसलाई केही हुँदैन ।

२४३. पुल, बाँध वा कुलोका मालिक मरेपछि उसको छोरो वा वशंज व्यक्ति त्यसको अधिकारी हुन्छ । ती नभएका नवीकरण वा जीर्णोद्धार गर्न चाहने व्यक्तिले राजाको अनुमति लिएर गर्नू ।

२४४. अन्यथा अर्काले बाण बिझाएका शिकारमा बाणको प्रयोग गर्ने व्याधाले आफ्ना बाणमात्र गुमाए झैं त्यसका प्रयास र धन व्यर्थ हुन्छ ।

२४५. धर्म जान्ने व्यक्तिहरू पृथु राजाले भरणपोषण गरिएकी हुनाले भूमि पृथ्वी भनिएझैं अरू राजा वा दुनियाँहरूले पनि भरणपोषण गरिने हुँदा पृथ्वी राजा वा दुनियाँ भरणपोषण गर्नलायक भार्या हुन् भन्दछन् । त्यसै हुनाले जसले ठुटा उखेलेर खेत बिरायो खेत उसैको हुन्छ, जसले बाण हानेर गिरायो शिकार उसैको हुन्छ । जमीनको मालिक काम गर्न नसक्ने भएमा वा मरेमा वा बेपत्ता भएमा रोकटोक गर्ने कुनै नहुँदा उसको जमीन कसैले कमाएमा त्यो कमाउने व्यक्तिले त्यस जमीनको उब्जनी भोग्न पाउँछ ।

२४६. यसरी जमीन जोत्न लाग्दा जमीनको हराएको मालिक टुप्लुक्क आइपुग्यो भने उसको लागत खर्च दिएर उसले आफ्नो जमीन आफैं कमाउन पाउँछ ।

२४७. जमीनको मालिक ७ वर्षसम्म बेपत्ता रहेर आठौं वर्षमा उपस्थित हुन आयो भने ८ भागको १ भाग जमीन कमाउनेलाई छोडी आफूले पहिले भोगेको जमीन प्राप्त गर्न सक्छ ।

२४८. जमीन १ वर्ष बाँझो रहेमा आधा पर्ती मानिन्छ । ३ वर्ष बाँझो रहेमा पूरा पर्ती मानिन्छ । ५ वर्षसम्म लगातार पर्ती रहेको जमीन जङ्गलबराबर मानिन्छ ।

२४९. खेतबारी वा घर कुनै व्यक्तिले तीन पुस्तासम्म क्रमशः लगातार भोग गर्दैआएको छ भने राजाको आदेशबाहेक अरू कुनै उपायले कसैले त्यसबाट खोस्न सक्तैन ।

२५०. बार बारेर लगाएको बाली गाई-भैंसी आदिले बार नाघेर नष्ट गरिदिए भने र गोठालाले ती पशुलाई त्यो बाली नष्ट गर्नबाट रोकेन भने त्यस गोठालालाई नै दण्ड गर्नू वा क्षतिपूर्ति भराउनुपर्छ ।

२५१. दश दिनभित्रकी सुत्केरी गाई, राँगा, बोका, घोडा र हात्तीले बार नाघेर बाली नष्ट गरेमा जग्गाधनीले आफ्नै शक्तिले तिनलाई हटाउनुपर्छ । तिनका मालिक दण्डभागी हुँदैन ।

२५२. गाउँका छेउछाउ वा विशिष्ट प्रकारका गौचरनका छेउछाउ वा ठूला सडकका छेउछाउमा जुन जमीन हुन्छ, त्यस्तामा बाली लगाएर बारबेर केही गरेको छैन भने त्यस्तो बाली वस्तुभाउले नष्ट गरिदिएमा गोठालाको गल्ती मानिँदैन ।

२५३. सडक बाटोका छेउका खेतबारीमा लगाएको अनाजको सुरक्षाका लागि त्यस्तो बार लगार्नुपर्छ, जसले गर्द ऊँटले अनाज देख्न नसकोस्, गाई र घोडाजस्ता पशुले नाघ्न नसकोस् एवं बनेलले भत्काउन पनि नसकोस् ।

२५४. गाईले बाली नष्ट गरेमा एक पाद (१/४) दण्ड गर्नू । भैंसीले नष्ट गरेमा त्यसको दोब्बर दण्ड गर्नू।खसी, बाखा, भेडा र बाच्छा-बाच्छीले बाली नष्ट गरेमा एक पाद (१/४) दण्ड गर्नू।

२५५. हात्तीले र घोडाले अनाज नष्ट गरे तापनि तिनलाई वा तिनका मालिकलाई कुनै दण्ड गर्नुहुँदैन, किनभने ती प्रजापालक मानिएका छन्।गर्भिणी गाई र सुत्केरी चरित्रहीन महिलालाई पनि दण्ड नगर्नू ।

२५६. गाई, भैंसी बार फोरेर अनाज खाई टन्न अघाएर त्यहीँ बसेछन् भने तिनका मालिकलाई दोबर दण्ड गर्नू, त्यहीँ बसेर भोकाएका बेलामा अनाज खाँदै रातै त्यहीँ बिताएछन् भने चौगुना दण्ड गर्नू गोठालाले जानीजानी बार फोरेर अरुको धान र खेत चराएमा त्यसलाई चोरलाई गर्नुपर्ने चौरदण्ड गर्नू।

२५७. गोठालाका गल्तीले गाई-भैंसी हराएर कसैका धान खेतमा उपस्थित भई लगाएको बाली नष्ट गराएमा गाई-भैंसीका धनीलाई दण्ड नगरी त्यसै गोठालालाई दण्ड गर्नू ।

२५८. गोठालालाई राजाका सिपाहीहरूले पक्रिए वा उसमाथि वज्र पऱ्यो वा उसलाई सर्पले डस्यो वा ऊ रूखबाट खस्यो, यस्तो अवस्थामा गाई-भैंसीले अरूको धान खेत नष्ट गरिदिएमा तिनका धनीले खेतवाला कृषकलाई अन्न बदला दिएर आफ्ना गाई-भैंसी फिर्ता ल्याउनुपर्छ ।

२५९. गाईले नष्ट गरिदिएको आफ्ना धान खेतका अन्नको बदला अनाज जुन कृषक चाहन्छ, उसलाई सामन्तको अनुमति लिएर शासकले पशुधनीबाट क्षतिपूर्ति भराइदिनू ।

२६०. रूखका ठुटा उखेल्ने व्यक्तिको खेत हुन्छ, बाण बोकेका व्यक्तिको शिकार हुन्छ । अर्काले बाण बिझाएका शिकारमा बाणको प्रयोग गर्ने व्यक्तिका बाणहरू खेर जान्छन् ।

२६१. जमीनको मालिक असक्त भएमा वा मरेमा वा हराएमा कसैले रोकटोक नगरेकाले अर्को व्यक्तिले त्यो जमीन जोती कमाई बाली लाउन लाग्दा जमीनको मालिक आइपुग्यो भने जमीन उसैले कमाउन पाउँछ ।

२६२. घर-खेत भनेका जहानियाँ दुनियाँका बासका कारण हुन् । त्यस कारण राजाले जहानियाँ दुनियाँका घर-खेतमा हस्तक्षेप नगर्नू । जहानियाँ दुनियाँको मूल नै त्यही हो ।

२६३. मुलुक बढेमा राजाको ढुकुटी पनि बढ्छ, धर्म पनि बढ्छ। मुलुक घट्तै गएमा राजाको धर्म पनि घट्छ, ढुकुटी पनि घट्छ । त्यस कारण राजाले श्रीसम्पत्ति धर्म बढ्ने काममा खर्च गर्नुपर्छ ।

क्षेत्रसीमाविवादपद समाप्त भयो ।

# स्त्रीपुंसयोगनामक प्रकरण

२६४. स्त्री र पुरुषको जुन विवाहविधि छ, त्यसलाई स्त्री र पुरुषको सम्बन्ध (स्त्रीपुरुषयोग) भन्दछन् । त्यही स्त्री पुरुष सम्बन्ध नै यहाँ विवादको स्थान भनिन्छ ।

२६५. स्त्री र पुरुषको सम्बन्ध हुनुभन्दा पहिले उनीहरूको परस्परमा वरणको विधान हुन्छ। अर्थात् स्त्रीद्वारा पुरुषको र पुरुषद्वारा स्त्रीको वरण हुन्छ। केवल वरणमात्र गरेर पति पत्नी बन्नुभन्दा पाणिग्रहण (विवाह) संस्कार गरीकन पति पत्नी बन्नु असल हुन्छ, किनभने केवल वरणमात्र गरेर बनाइएको दाम्पत्य सम्बन्ध अनियमित हुन्छ, किनकि यसमा यसमा धेरै दोष देखिएका छन् । स्त्रीमा अर्धाङ्गिनीत्व पत्नीत्व तब आउँछ, जब विवाहका मन्त्रहरूले उनीहरूमा नियमितता ल्याउँछन् ।

२६६. ब्राह्मण, क्षत्रिय, वैश्य, शूद्र यी चारै वर्णका मानिसको निमित्त आआफ्नै वर्णकी पत्नी श्रेयस्करी हुन्छन् । स्त्री का निम्ती पनि आ आफ्नै वर्गका पति श्रेयस्कर हुन्छन् ।

२६७. ब्राह्मणका लागि सुल्टोरूपमा आफ्ना वर्णकी स्त्रीबाहेक क्षत्रिया, वैश्या र शूद्रा यी तीन वर्णकी स्त्रीहरू पत्नी बन्न सक्छन् । शूद्र वर्णकी कन्याका लागि उल्टो रूपमा वैश्य, क्षत्रिय र ब्राह्मण यी तीन वर्णका वर आफ्नो वर्णबाहेकका पति बन्न सक्छन् ।

२६८.	क्षत्रियका निमित्त आफ्नो वर्णबाहेकका वैश्या र शूद्रा दुई अरू पत्नी हुन सक्छन् । वैश्यका निमित्त आफ्नो जातबाहेकका शूद्रा एक पत्नी हुन सक्छिन् । वैश्या कन्याका आफ्नो जातबाहेकका ब्राह्मण र क्षत्रिय यी दुई पति हुन सक्छन् । क्षत्रिय कन्याको आफ्नो जातबाहेकको ब्राह्मण एकमात्र पति हुन सक्छ ।

२६९.	पितादेखि सातौं पुस्तासम्मका र मातादेखि पाचौं पुस्तासम्मका सगोत्र र समान प्रवर भएका बन्धुबान्धव नातामा विवाह हुँदैन ।

२७०.	कन्या पक्षका व्यक्तिहरूले कन्या दिइने वरमा पुरुषत्व छ वा छैन उसकै अङ्गका लक्षणहरूद्वारा परीक्षा गरी अनि मात्र कुरा चलाउनू । निःशङ्करूपमा पुरुषत्व भएको भएमात्र त्यो केटा कन्या प्राप्त गर्न लायक हुन्छ ।

२७१.	गला र काँधलाई जोड्ने खकाले हाड खूब कसिएको, शरीरका अरू अवयवहरूका साथै गर्धन खूबै कसिलो भएको, ठूलो नाक र पातलो जिब्रो भएको, सुदृढ गति र सुरिलो स्वरवाला, पानीमा वीर्य नउत्रने, पिसाब जोडसँग आवाज गरेर आउने र फिंजै-फिंज हुने यी लक्षणहरूले युक्त भएको व्यक्ति पुरुष हुन्छ, यसको विपरितचाहिँ मैथुन गर्न नसक्ने नपुंसक हुन्छ ।

२७२.	नपुंसक चौध प्रकारको हुन्छ भन्ने कुरा विद्वान्हरूले शास्त्रमा बताएका छन् । औषधि उपचार गरेर ठीक हुने र उपचारबाट पनि ठीक नहुने । तिनीहरूको विधि क्रमशः बताइएको छ । कोही स्वभावतः नपुंसक हुन्छन् यिनलाई निसर्गषण्ड भन्दछन् ।

कोही छालाको मुलायम डोरीले लिङ्ग बाँधेर वीर्यको वेग रोक्ने गर्छन् यसो गर्ने व्यक्तिको पनि सन्तान समयमा हुँदैन वा हुँदैहुँदैन यसलाई वध्रषण्ड भन्छन् । मान्य जनका श्रापले वा रोगले अथवा देवताका क्रोधले केही समयसम्म वा कुनै शर्तका कारणले व्यक्तिमा स्त्रीभोगशक्ति हुँदैन, यस्तालाई पक्षषण्ड भन्दछन् । रइर्ष्याषण्ड, सेव्य, वातोरेता, लिङ्गको अग्रभागमा घाउ भएको मुखेभग, आक्षिप्तबीजी (कसैले अभिचारद्वारा वीर्य सुकाइदिएको), मोघबीजी (संभोग गरे तापनि सन्तान नहुने), शालीन (लाजले संभोग गर्न आँटै नगर्ने) पनि नपुंसक नै हुन् । यिनमा पक्षषण्डलाई उपचार गरेर ठीक गर्न सकिन्छ र गर्नू पनि । ईर्ष्याषण्डको अवधि एक वर्षको मात्र हुन्छ । त्यसपछि ऊ पुरुषत्व प्राप्त गर्न सक्छ । त्यसपछिका चार नपुंसकहरू (सेव्य, वातोरेता, मुखेभग, आक्षिप्तबीजी) जो बताइएका छन् ती र पहिले जन्मिँदा योनि नभएका पछि उपचारविधिद्वारा योनि बनाइएका स्त्रीहरू पनि पतित जस्तै गरी त्यागनलायक हुन्छन् । आक्षिप्तबीजी र मोघबीजी नामका नपुंसक पति जुन महिलालाई प्राप्त हुन्छन्, ती महिलाले एक वर्षसम्म आफ्ना पतिको नपुंसकता हटाउन उपचार गर्दै उनको प्रतीक्षा गर्नू । त्यतिमा पनि ठीक नभए तिनलाई छोडिदिएर अर्कोसँग विवाह गर्नू ।

२७३. लज्जालु पतिकी ठिटी पत्नीसँग एकान्तमा भेटघाट हुँदा ध्वजपतन हुन्छ (लिङ्ग उठ्तैन)। यस्तोमा स्त्रीले पतिको मानसिक कमजोरी हटाउने उपाय गर्नू, सन्तान नभए उपचार गराउनू ।

२७४. जुन पुरुष अर्काको दास छ, उसले यो कुरा लुकाएर स्त्रीका साथ विवाह गरेको छ भने कुरा खुलेपछी त्यस स्त्रीले अर्का पतिसँग विवाह गर्नू । यो प्रजापतिको सिद्धान्त हो ।

२७५. सन्तानका निमित्त स्त्रीहरूको सृष्टि भएको हो । त्यस कारण स्त्रीहरू क्षेत्र हुन् । क्षेत्र (खेत) बीउ भएकालाई दिनुपर्छ । बीउ नभएको व्यक्ति क्षेत्र ओगट्न लायक हुँदैन ।

२७६. बाबुले स्वयं कन्यादान गर्नू अथवा बाबुको अनुमति लिएर दाजु वा भाइले कन्यादान गरे पनि हुन्छ । अरू नभएमा आमाका बुबा (मातामह) ले कन्यादान गर्नू । मातामह नभए मामाले वा मामाका कुलका बन्धुबान्धवहरूले कन्यादान गर्नू । आमा भएमा उनी स्वयंले कन्यादान गर्नु, आमा अस्वस्थ छिन् भने आफ्ना जातका सबैको कन्यादान गर्ने हक  हुन्छ ।

२७७. कुनै पनि अभिभावक नभएकी आफ्ना सत्यमा रहेकी कन्या विवाहका लागि उत्सुक छन् भने उनी सीधै राजाकहाँ जानू र आफ्नो अवस्था बिन्ति गर्नू । त्यसपछि राजाबाट जसलाई वरण गर्ने आज्ञा हुन्छ, उसैलाई स्वयं वरण गर्नू ।

२७८. वरण गरिएको व्यक्ति आफ्ना वर्णको उमेर सुहाउँदो कुल सुहाउँदो पढेलेखेको हुनुपर्छ । यस्तो व्यक्तिसँग विवाह गरेर उसैकी सहधर्मचारिणी बनेर रहनू र सन्तान पैदा गर्नू ।

२७९. कुनै व्यक्ति कन्यालाई विधिवत् स्वीकार गरेर परदेश जान्छ भने आफू तीनपल्ट रजोवती हुँदासम्म उसको प्रतीक्षा गर्नू, त्यसपछि कन्याले अर्को व्यक्तिसँग विवाह गर्नू ।

२८०. कन्याले आफ्ना बन्धुहरूलाई म यति पल्ट ऋतुमती भइसके, मेरो विवाहको सम्बन्धमा चासो लिएर व्यवस्था गर्नुपर्ने तपाईंहरूले नै हो इत्यादि कुरा बताइनू । कन्याले यति भन्दा पनि कुनै बन्धु तातेनन् भने ती सबै कन्याका ऋतुकालबराबरका गर्भघाती हुन्छन् ।

२८१. यस कारण छोरी रजोवती हुनुभन्दा पहिल्यै कन्याका पिता स्वयंले एकैपटक विधिसाथ उनको विवाह संस्कार गरिदिनू । नत्र उनलाई ठूलो पापले छुन्छ । यही शास्त्रप्रतिपादित छोरीको विवाहविधि हो ।

२८२. अंशवण्डा, कन्यादान र दिन्छु भन्ने प्रतिज्ञा यी तीन कुरा सज्जनहरूका एकैपल्ट मात्र हुन्छन्, यी दोहोऱ्याइदैनन् ।

२८३. कन्याका शरीरमा स्त्रीत्वका चिह्नहरू देखिन थालेपछी सोम देवताले यिनका साथ भोग गर्छन् । स्तन निस्किएपछि गन्धर्वहरूले यिनका साथ भोग गर्छन् । रजोवती भएपछि अग्निले यिनका साथ भोग गर्छन् । त्यस कारण कन्याका

पिताले आफ्नो कन्याको विवाह उनमा स्त्रीत्वका चिह्न नदेखिँदै रजोवती नहुँदै स्तन नपलाउँदै सोमादि देवताहरूले भोग नगर्दै गरिदिनू ।

२८४. ८ प्रकारका विवाहहरूमध्ये ब्राह्मण, प्राजापत्य, आर्ष, दैव र गान्धर्व यी ५ प्रकारका विवाहहरूमा यही विधि लागू हुन्छ । आसुर, राक्षस र पैशाच यी ३ विवाहहरूमा वरमा रहेला गुणहरूलाई दृष्टिमा राखेर कन्याद्वारा आत्मदान हुन्छ ।

२८५. वरबाट कन्याको शुल्क लिएर विवाह गरिदिने चलनमा एक व्यक्तिबाट कन्याशुल्क प्राप्त भइसकेपछि त्यसभन्दा बढी गुणवान् धनी व्यक्ति तिनै कन्याको अभ्यर्थीको रूपमा उपस्थित भएमा कर्म, अर्थ, काम ती तीन पुरुषार्थमा आघात नपर्ने गरी झूटो बोल्न हुन्छ, बोल्नुपर्छ ।

२८६. वास्तविक रूपमा कुनै प्रकारको दोष नभएकी कन्यामा खराबनियतले यिनमा यस्ता-यस्ता दोष छन् भनी हल्ला गरिदिएर ईर्ष्याका भरमा कन्यालाई दोषी नतुल्याउनू । त्यस्तै निर्दोष वरमा पनि झूटा दोष साबित गर्ने प्रयास नगर्नू । कन्या वा वरमा वास्तविक दोष भए तिनीहरूले परस्परमा एउटाले अर्कोलाई त्यागिदिएमा कुनै पाप लाग्दैन ।

२८७. जुन व्यक्ति विधिपूर्वक कन्यादान गरेर कन्यालाई वरका घरमा पठाउँदैन आफैं पालिराख्छ, वरमा कुनै प्रकारको दोष छैन भने त्यस्ता कन्याका पितालाई राजाले सजाय गर्नू ।

२८८. दोषी कन्याका दोष नबताइकन कोही बिहादान गरिदिन्छ भने त्यस्ता व्यक्तिलाई राजाले दण्ड गर्नू ।

२८९. कुनै व्यक्तिले वर पक्षको द्वेषले कन्याको दोष नदेखाई केटालाई वा नपुंसकलाई केटी हो भनेर विवाह गराएछ भने त्यस्ता व्यक्तिले सर्वथा दण्ड पाउँछ ।

२९०. जुनै वरले कुनै निर्दोष कन्यालाई आफूले विवाह गर्नको निमित्त सकारेर पछी गर्दैन भने त्यसलाई पनि दण्ड दिनुपर्छ र उसले चाहे पनि नचाहे पनि ती कन्यासँग विवाह गर्नैपर्छ ।

२९१. धेरै समयदेखिको निन्दित रोग, अङ्गभङ्ग, परपुरुषसँग सम्भोग गराएको प्रमाण, ज्यादै निर्लज्ज, परपुरुषमा भावनात्मक लगाव यी कन्याका दोष हुन् ।

२९२. पागल बन्नु, पतित हुनु, नपुंसक हुनु, अभागी बन्नु, दाजुभाइ आदि बन्धुबान्धवद्वारा त्यागिएको हुनु र धेरै समयदेखि निन्दित रोग लाग्नु र अङ्गभङ्ग हुनु यी वरका दोष हुन् ।

२९३. ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र यी ४ वर्णका संस्कारका रूपमा ८ प्रकारका विवाह बताइएका छन् । तिनमा पहिलो ब्राह्मणविवाह हो । दोस्रो प्राजापत्यविवाह हो । तेस्रो आर्षविवाह र चौथो दैवविवाह हो । एवं पाँचौ गान्धर्वविवाह, छैटौं आसुरविवाह, सातौं राक्षसविवाह हो र आठौ पैशाच विवाह हो । तीमध्ये ब्राह्मविवाहमा सत्कारसाथ वरलाई निम्त्याएर उनलाई विधिसाथ अलङ्कृत कन्या सुम्पिइन्छ । प्राजापत्यविवाहमा (कुनै यज्ञादि कर्म

भएका ठाउँमा वा मन्दिरमा) वरलाई लगेर आजउप्रान्त तिमीहरू पति पत्नी भयौ तिमीहरूले धर्म कर्म आदि जीवनका सबै महत्त्वपूर्ण काम सँगै गर्नू भनिन्छ । कन्याका पितालाई गाई र गोरू दिएर कन्यालाई आफ्ना घरमा लगी विवाह गर्नुलाई आर्षविवाह भन्छन् । दैवविवाहमा यज्ञका वेदीमा अलङ्कृत कन्यालाई लगी यज्ञ कर्म गरिरहेका ऋत्विक्लाई यी कन्या मैले तपाईंलाई आजदेखि समर्पित गरें भनी कन्या सुम्पिइन्छिन् । गान्धर्वविवाहमा परस्परमा अनुरक्त युवक युवतीहरू मनकल्पित विधिविधानद्वारा संयुक्त हुन्छन् । आसुरविवाहमा कन्या पक्षका प्रमुख व्यक्तिलाई कन्यासम्बन्धी शुल्क दिएर कन्याका साथ विवाह गरिन्छ । राक्षसविवाहमा बलपूर्वक जबर्जस्ती अपहरण गरेर कन्यालाई वरद्वारा आफ्नो घरमा लगी विवाह गरिन्छ । पैशाचविवाहमा निदाएको अवस्थामा वा कुनै मादक पदार्थ पिएर बेसूर भएको अवस्थामा उनीसँग जाइलागी अपहरण गरिन्छ । आठ प्रकारका विवाहमध्ये यो अधम विवाह हो ।

२९४. यी विवाहमध्ये ब्राह्म आदी ४ विवाह धर्मसम्मत विवाह हुन् । गान्धर्वविवाह सामान्य विवाह हो । आसुर आदि अरू ३ विवाह धर्मविरूद्ध विवाह हुन् ।

२९५. एकभन्दा बढी पुरुषसँग सम्बन्ध राख्ने स्वास्नीमान्छेका ७ भेद छन् । यीमध्ये ३ प्रकारका स्वास्नीमान्छेलाई पुनर्भू र ४ प्रकारका स्वास्नीमान्छेलाई स्वैरिणी भनिन्छ ।

२९६. यौनसम्बन्ध नभएकी खालि विवाह मात्र भएकी पतिलाई छोडेर अन्यत्र जाने स्त्री पहिलो प्रकारकी पुनर्भू कहिन्छिन् । त्यस्ती स्त्रीको फेरी संस्कार हुन सक्छ । आफूभन्दा कम उमेरका पतिसँग विवाह भएकी स्त्री अरूसँग सम्बन्ध राखेर पछी आफ्ना पतिकहाँ आउँछिन् भने त्यस्ता प्रकारकी स्त्री दोस्रो प्रकारकी पुनर्भू कहिन्छिन् । पतिको मृत्युपछि देवर नभएको कारणले बान्धवहरूद्वारा सगोत्री र सपिण्डीसँग विवाह गराइएकी स्त्री तेस्रो प्रकारकी पुनर्भू कहिन्छिन् ।

२९७. सन्तान भएकी या बाँझी स्त्री आफ्नो लोग्ने जीवित छँदाछँदै कामवासना तृप्तिका लागि अर्को पुरुषसँग जान्छे भने त्यो पहिलो प्रकारकी स्वैरिणी कहलाउँछे । लोग्ने मरेपछि आफूलाई लान तयार परेका देवर आदिलाई छोडेर आफूले रुचाएको अर्को पुरुषसँग जान्छे भने त्यो दोस्रो प्रकारकी स्वैरिणी कहलाउँछे । अरू देशबाट नौलो देशमा आएकी, धनले किनिएकी, भोक तीर्खाले आकुलव्याकुल भएकी जुन स्त्री म तपाइँकी हुँ मलाई स्वीकार्नुहोस् भनेर अभीष्ट पुरुषका समीपमा आउँछिन्, उसलाई तेस्रो प्रकारकी स्वैरिणी भन्दछन् ।

२९८. देश र धर्मको विचार गरेर अभिभावकहरूले बान्धवहरूलाई दिइएकी स्त्री दिइसकेपछि आफैं आँट गरेर आफूले रुचाएको अर्कै पुरुषमा आफूलाई सुम्पिन्छिन्, ती चौथो प्रकारकी स्वैरिणी हुन् ।

२९९. यी चार प्रकारका स्वैरिणीहरूमा पहिलेपहिले बताइएका स्वैरिणीहरू निन्दित हुन् र पछिपछि बताइएका स्त्रीहरू उत्तम हुन् । पिण्ड तर्पण आदिमा तिनका सन्तानको विकल्प सोच्नुपर्ने हुन्छ ।

३००. दोस्रो तेस्रो विवाह गर्ने स्वैरिणीहरूका निमित्त यो विधि बताइएको छ। तिनमा पहिलेपहिलेका निन्दित र पछिपछिका उत्तम मानिन्छन्।

३०१. तीमध्ये सन्तान नहुने व्यक्तिले सन्तानका लागि उनका पतिलाई शुल्क दिएर कोही स्त्री लगिन्छन्, त्यस्ताका सन्तान शुल्क दिनेका हुन्छन् । शुल्क नदिई लगिएका स्त्रीहरूका सन्तान पहिलेकै लोग्नेका हुन्छन्, पछि लानेका हुँदैनन् ।

३०२. कसैका खेतमा खेतका मालिकले थाहा नपाई अरू कसैले बीउ छरेर अनाज फलायो भने त्यो अनाज फलाउनेको नभएर जग्गाधनीको भए जस्तै कसैकी पत्नीमा अर्काले उसको पतिलाई थाहा नदिई गर्भाधान गऱ्यो भने त्यसबाट उत्पन्न सन्तान पहिला पतिकै हुन्छ, गर्भाधान गर्नेको हुँदैन । पानीका भेलले बगाएर ल्याएको वा हावाका झोँक्काले उडाएर ल्याएको अनाजको बीउ जसका खेतमा परी उम्रिएर फल्छ त्यो फल त्यसै जग्गाधनीको हुन्छ, पानीको भेल र हावाका झोँक्काको हुँदैन ।

३०३. साँढेले आफ्ना गोठको आसपासमा चर्दै छेउछाउमा आएका गाईहरूलाई गर्भिणी बनाएर बाच्छा पैदा गरिदिन्छ । ती बाच्छा

जसका गाई हुन् उसैका हुन जान्छन् । साँढेको वीर्यस्राव फजूल हुन्छ ।

३०४. जमीनका मालिकको अनुमति लिएर जसका जमीनमा बीउ रोपिन्छ अर्थात स्त्रीका पतिको अनुमति लिएर अर्को व्यक्तिले उनमा सन्तान उत्पन्न गर्‍यो भने ती सन्तान दुवै बाबुका हुन्छन् ।

३०५. जमीनविना पनि अनाज हुँदैन, बीउविना पनि अनाज हुँदैन । अनाज उब्जाउन दुवै कुराको आवश्यकता परेझैं सन्तान उत्पन्न गराउनमा पनि आमा र बाबुको बीज दुवैको आवश्यकता हुने हुँदा धर्मका दृष्टिलेसन्तान आमा-बाबु दुवैका हुन्छन् ।

३०६. आफ्नी पत्नी घरमा नआएकी हुँदा उनका खोजीमा दोस्रो घरमा जाँदा पतिले उनलाई दोस्रो पुरुषका साथ सहवास गरेको देख्नुलाई संग्रहण भन्दछन् ।

३०७. विनाकसूर पत्नीलाई त्यागिदिने, नपुंसक (सन्तान उत्पन्न गर्न नसक्ने), क्षयरोगले ग्रस्त र कुकर्मले पतित यस्ता पुरुषकी निर्दोष पत्नी आफ्नै इच्छाले कुनै पुरुषकहाँ आएमा त्यस्ती स्त्रीसँग सहवास गर्ने व्यक्तिलाई दोष लाग्दैन ।

३०८. परपत्नीका साथ बेमौकामा कुठाउँमा एकान्तमा रहने, कुराकानी गर्ने, आमोद-प्रमोद गर्ने यी तीनै क्रियालाई संग्रहण बात लाग्ने अपराधका रूपमा लिनुपर्छ ।

३०९.  नदीका सङ्गम, तीर्थ, बगैंचा र वनमा स्त्री र पुरुषमात्र एक्लै भेटघाट, कुरा तथा एकान्त गर्छन् भने त्यसलाई संग्रहण भनेर लिन सकिन्छ ।

३१०.  स्त्रीलाई पुरुषले कुठाउँमा स्पर्श गर्ने र उसले स्पर्श गर्दा स्त्रीले सहिरहने गरेमा परस्परको अनुमतिबाट त्यसो हुन गएको भन्ने बुझिने हुँदा त्यो सबै संग्रहण मानिन्छ ।

३११.  स्त्री पुरुषमा एक अर्कोले अर्काको उपकार गर्नु, खेलबाड गर्नु, गहना कपडाहरू छुनु र एउटै पलङ्गमा सँगै बस्नु इत्यादि सबै संग्रहण मानिन्छ ।

३१२.  स्त्री र पुरुष परस्परमा एक अर्कोले एक अर्कालाई विविध खाद्य पदार्थ, कपडा, माला, सुगन्ध द्रव्य पठाउँछन् भने त्यो पनि संग्रहण मानिन्छ ।

३१३.  घमण्ड वा मोह वा प्रशंसा गरेर यस स्त्रीलाई मैले भोग गरेको छु वा तिनीसँग मेरो सहवास छ भनेर पुरुष स्त्री स्वयं भन्दछन् भने यो पनि संग्रहण हो ।

३१४.  कुनै स्त्रीलाई पुरुषले हातमा समायो वा चुल्ठामा समायो वा कपडाका छेउमा समायो वा पर्ख-पर्ख भन्यो भने त्यो सबै संग्रहण मानिन्छ ।

३१५.  आफ्नो जातभन्दा बाहिरकी स्त्रीका साथ भोग गरेमा पुरुषलाई उत्तमसाहस दण्ड गर्नू । आफूभन्दा माथिल्लो जातकी स्त्रीका साथ सहवास गरेमा त्यसलाई प्राणदण्ड दिनू ।

३१६. कामवासना नभएकी कन्यामा जबर्जस्ती सहवास गरेमा पुरुषका दुई औंला काटिदिनू । आफूभन्दा माथिल्लो जातकी र कामवासना नभएकी कन्यामा जबर्जस्ती भोग गरेमा पुरुषलाई प्राणदण्ड दिनुका साथै उसको सर्वस्वहरण गरिदिनू ।

३१७. कामवासना भएकी आफ्नै वर्णकी स्त्रीलाई भोग गरेमा दोष लाग्दैन । ती कन्यालाई अलङ्कृत गरेर मर्यादापूर्वक विवाह गर्नू ।

३१८. आमा, सानिमा, सासू, माइजु, फुपू, काकी, शिष्यपत्नी, बहिनी, उनकी साथी, बुहारी, छोरी, गुरुमा, भाउजु, एकै गोत्रकी स्त्री, आफ्नो शरणमा परेकी स्त्री, रानी, सन्यास लिएकी स्त्री, धाई आमा, पतिव्रता स्त्री, आफूभन्दा उत्तम जातकी स्त्री यी सबै गुरुतल्प मानिन्छन् । यहाँ बताइएका कुनै पनि स्त्रीमा जाइलाग्ने व्यक्ति गुरुतल्पगामी मानिन्छ । त्यस्ता गुरुतल्पगामी पुरुषका निमित्त एकमात्र दण्ड शास्त्रले बताएको छ सो हो- उसको लिङ्ग काटिदिनु । यसमा अरू दण्ड बताइएको छैन ।

३१९. मर्यादा नाघेर पशुयोनिमा संभोग गर्नेलाई एक सय पण जरीवाना गर्नू, गाईमा र चाण्डाली आदिमा गमन गर्नेलाई मध्यमसाहस दण्ड गर्नू ।

३२०. राजाले चलाएका दण्डले अगम्यगामी (भोग गर्न नहुने स्त्रीमा भोग गर्ने) लाई शिक्षा दिन्छ । प्रायश्चित गराउनु भनेको पापबाट छुटकारा दिलाउनु हो ।

३२१. कसैको अधनमा नबसेकी ब्राह्मणीबाहेककी स्त्री, वेश्या, दासी, लोग्नेले घरबाट निकालेकी र आफूभन्दा तल्ला जातका यस्ता स्त्रीहरू भोग्या हुन्छन् । माथिल्ला जातका उक्त प्रकारका स्त्रीहरूसँग भने संभोग गर्नुहुँदैन ।

३२२. उक्त प्रकारको स्थितिमा रहेका नोकर्नीहरूमा संभोग गर्दा परस्त्रीहरूमा भोग गर्दा झैं दोष लाग्छ । दासी नोकर्नीहरू भोग्या भए तापनि तिनीहरूमा संभोगार्थ जानुहुँदैन, किनभने तिनीहरू परस्त्री हुन् ।

३२३. कुनै महिलामा सन्तान नजन्मँदै उनका पतिको स्वर्गवास भयो भने र उनका अभिभावक सासू ससुराहरूले उनलाई देवरबाट सन्तान उत्पन्न गराउन उक्साए भने सन्तानका लागि मात्र उनले देवरका साथ सहवास गर्न सक्तछिन् ।

३२४. देवरले पनि यसरी धर्मसंकटमा परेर आफूकहाँ आएकी भाउजुलाई सन्तान प्राप्ति नभएसम्म (ऋतुकालमा) स्वीकार्नुपर्छ । सन्तान उत्पन्न हुनासाथ त्यस प्रसङ्गबाट हट्नुपर्छ अन्यथा पतित हुन्छ ।

३२५. भाउजुका साथ देवरले सहवास गर्न बाध्य हुनुपर्दा त्यस क्रियाभन्दा पहिले पूरा शरीरमा घीउ वा असुगन्धित तेलले मालिस गरेर सम्पर्क गर्नु । त्यसमा पनि मुख मिलाउने वा जननेन्द्रियबाहेक अरू कुनै भाउजुका शरीरका अवयवको आफ्ना अवयवले स्पर्श नगर्नू ।

३२६. छोरो भएकी, आफूले मान्नुपर्ने, कामवासना नै नभएकी, आफूसँग सहवास गर्न नचाहने, गर्भिणी, निन्दनीय काम गर्ने, अभिभावक बन्धुहरूले आफूसँग सहवास गर्ने अनुमति नदिएकी, यी सात प्रकारका स्त्रीहरूका साथ पुरुषले सहवास गर्नुहुँदैन ।

३२७. अभिभावकद्वारा देवरका साथ सहवास गर्न अनुमति दिइएको जुन स्त्री देवरबाट सन्तान उत्पन्न गराउँछिन्, उनको त्यस सन्तानलाई धर्मको व्याख्या गर्ने मानिसहरू जारबाट उत्पन्न भएको अंश दिन नपर्ने भन्दछन् ।

३२८. बन्धुवर्ग वा अभिभावकको अनुमति नभई देवर भाउजुमा संभोगार्थ गयो भने वा जेठो दाजु बुहारीमा गयो भने ती दुवै गुरुतल्पगामी पतित हुन्छन् ।

३२९. सन्तान नभएर ऊ स्वयं अन्तिम पुस्ता हुन पुगेमा आफ्ना मान्यजनहरूले कान्छा भाइकी पत्नीमा सन्तान पैदा गराइदेऊ भनी अनुमति दिएमा वासनाले होइन सन्तानका लागि मात्र कान्छा भाइकी पत्नीमा जान हुन्छ ।

३३०. कुल नै नष्ट हुन लाग्दा आफूलाई अनुमति दिने कुनै मान्य अभिभावक छैन भने राजाको हुकुम लिएर देवर वा जेठा दाजुले भाउज्यू वा भाइबुहारीमा गर्भाधान गर्नू ।

३३१. पूर्वोक्त विधिविधानद्वारा शुद्ध भएर ऋतु स्नान गरेकी स्त्री (भाउजू वा बुहारी) मा एक पल्ट गर्भधान गर्नू । स्त्रीले गर्भधारण

नगरेसम्म ऋतुऋतुमा सहवास गर्नू गर्भधारण गरेपछि स्त्री पुरुष दुवै आआफ्ना मर्यादामा बस्नू ।

३३२. यहाँ बताएबाहेक मनमा कामवासना लिएर पुरुष वा स्त्रीका आग्रहले सहवास गरेमा त्यस्ता स्त्री पुरुषलाई राजाले कडा दण्ड दिनुपर्छ । नत्र राजा स्वयं अपराधी ठहर्छन्, नरकगामी हुन्छन् र धर्ममर्यादा नष्ट हुन्छ ।

३३३. अरूको ईर्ष्या डाहाबाट उत्पन्न भएको प्रेमसम्बन्धमा सम्बद्ध स्त्री पुरुषमात्र अपराधी हुन्छन् बन्धुबान्धव वा राजामा कुनै दोषकसूर हुँदैन ।

३३४. स्त्रीले गुप्तरूपमा व्यभिचार नगरी पति वा पत्नीले विरुद्ध भएर अर्कालाई त्यागिदिए त्याग्नेको अपराध हुन्छ ।

३३५. स्त्रीले व्यभिचार गरेमा उसको शिर मुडाइदिनू र जमीनमा ओछ्यान लगाएर सुत्न लगाउनू, पलङ्गमा सुत्न नदिनू, सडेगलेका बासी अन्न खान र नराम्रा पुराना कपडा लगाउन दिनू, कुचो लगाउने र कसिङ्गर फाल्ने काम लगाउनू ।

३३६. स्त्रीधर्मबाट च्युत भएकी, आफैं गर्भ तुहाउन प्रयत्न गर्ने र लोग्नेलाई मार्ने योजनामा लागेकी स्त्रीलाई घरबाट निकालिदिनू ।

३३७. हरबखत विनाप्रयोजनका कुचक्र रच्ने एवं अप्रिय कुरा बोल्ने, पतिभन्दा पहिले खाने स्त्रीलाई बुझक्कड व्यक्तिले तुरुन्त निकालिदिनू ।

३३८. बाँझी, सन्तान जन्माए पनि छोरी मात्र जन्माउने, निन्दनीय एवं सधैं पतिको विरुद्ध काम गर्ने स्त्रीलाई कामवासनाका दृष्टिले अभिनन्दन नगर्नू । यसो गर्दा पुरुष दोषी हुँदैन ।

३३९. पतिको अनुकूल काम गर्ने, नराम्रो अप्रिय नबोल्ने, घरायसी कामकाजमा सिपालु, पतिव्रता, सन्तान भएकी पत्नीलाई त्याग्ने पुरुषलाई राजाले कडा दण्ड गरेर मर्यादामा राख्नू ।

३४०. टाढाको नाता पर्ने वा एकै गोत्रको कन्या इत्यादि शास्त्रीय दृष्टिले विवाह गर्न नहुने कारण थाहा नभएर विवाह गरेकी कन्यालाई कारण थाहा भएपछि उनी निर्दोष छिन् र अन्यत्र पनि गएकी छैनन् भने त्यस्ती स्त्रीलाई उनका भाइबन्धुहरूले उनका पतिका घरमा लगेर जिम्मा लगाइदिनू । बन्धुहरू छैनन् भने उनी आफैं पतिकहाँ गएर उनलाई सम्झाई जिम्मा लाग्नू ।

३४१. पति आफूलाई छोडेर परदेश गएमा, मरेमा, सन्यास लिएर हिँडेमा, नपुंसक भएमा, पतित भएमा, यी पाँच प्रकारका आपतहरूमा स्त्रीहरूले अर्को पति वरण गर्ने विधान छ ।

३४२. ब्राह्मणीले परदेश लागेका आफ्ना पतिलाई ८ वर्षसम्म पर्खनू । सन्तान नभई परदेशिएकालाई ४ वर्षसम्म पर्खिए पुग्छ, त्यसपछि अर्का पतिको आश्रय लिनू ।

३४३. क्षत्रियकुलमा उत्पन्न स्त्रीले परदेश लागेका आफ्ना पतिलाई ६ वर्षसम्म प्रतीक्षा गर्नू, सन्तान नभई परदेश लागेको भए ३ वर्ष

पर्खिए पुग्छ । वैश्यकुलमा उत्पन्न स्त्रीले सन्तान भए ४ वर्ष पर्खनू, नत्र २ वर्ष पर्खनू ।

३४४. शूद्रकुलमा उत्पन्न स्त्रीलाई पतिले छोडेपछि यति समय पर्खनुपर्छ भनेर शास्त्रले तोकेको छैन । एउटा पतिले छोडेपछि अर्को पति लिँदा धर्मको उल्लङ्घन पनि मानिँदैन । विशेषगरी सन्तान नभएकी स्त्रीका लागि एक वर्षको समय पल्लो टुङ्गो हो ।

३४५. कुनै चिठ्ठीपत्र वा समाचारको आदानप्रदान नभएमा पति परदेशिएका महिलाहरूको प्रतिक्षाकाल यही हो । चिठ्ठीपत्र आदिको आदानप्रदान हुँदै रहेमा यहाँ बताइएका समयको दोब्बर प्रतीक्षाकाल हुन सक्छ ।

३४६. सृष्टिका स्रोत महिलाहरूले एउटै पतिलाई कुरेर जीवन बिताउनुपर्दा ब्रह्माजीको सृष्टिमा नै खलल पर्ने हुँदा तोकिएको समयपछि स्त्रीले दोस्रो घरजम गर्दा कुनै दोष छैन ।

३४७. अपेक्षाकृत उच्च जातिका पुरुषको आफूभन्दा नीच जातिकी स्त्रीमा सन्तान उत्पन्न गराउनु शास्त्रानुकूल अर्थात् अनुलोमविधि हो । पुरुषले आफूभन्दा उच्च जातकी महिलामा सन्तान उत्पन्न गराउनु प्रतिलोमविधि हो । यसरी प्रतिलोमविधिबाट जन्मिएको सन्तान वर्णशंकर हुन पुग्छ भनी सम्झनुपर्छ ।

३४८. अनुलोम र प्रतिलोम दुवै प्रकारका पुत्रहरू प्रत्येक अनन्तर, एकान्तर, द्वयन्तर यस्ता तीन प्रकारका हुन्छन् ।

३४९. उत्तम जातका ब्राह्मण, क्षत्रिय र वैश्यहरूबाट शूद्रा स्त्रीमा जन्मिएका सन्तानहरू क्रमशः उग्र, पारशव, निषाद भनिन्छन् । अर्थात् ब्राह्मणबाट शूद्रामा जन्मिएको छोरो उग्र, क्षत्रियबाट शूद्रामा जन्मिएको छोरो पारशव र वैश्यबाट शूद्रामा जन्मिएको छोरो निषाद कहलाउँछ । यी अनुलोम सन्तान भए ।

३५०. प्रतिलोम सन्तान यस प्रकारका हुन्छन्- शूद्रबाट ब्राह्मणीमा जन्मिएको छोरो चाण्डाल, वैश्यबाट ब्राह्मणीमा जन्मिएको सूत, क्षत्रियबाट ब्राह्मणीमा जन्मिएको सन्तान पारशव कहलाउँछ । यी प्रतिलोम सन्तान भए ।

३५१. ब्राह्मणबाट क्षत्रिय स्त्रीमा उत्पन्न सन्तान अन्बष्ठ कहलाउँछ । वैश्यबाट क्षत्रिया स्त्रीमा उत्पन्न सन्तान मागध भनिन्छ । शूद्रबाट क्षत्रिया स्त्रीमा उत्पन्न सन्तान क्षत्ता (सारथी) भनिन्छ । यिनमा पहिलो प्रकारको सन्तान अनुलोम र बाँकी दुई सन्तान प्रतिलोम हुन्छन् ।

३५२. शूद्रबाट वैश्या स्त्रीमा उत्पन्न पुत्र अम्बष्ठ भनिन्छ । ब्राह्मणबाट वैश्या स्त्रीमा उत्पन्न पुत्र यवन भनिन्छ । क्षत्रियबाट वैश्या स्त्रीमा उत्पन्न पुत्र आयोगवान भनिन्छ । यी तीन थरी सन्तानमा तेस्रो आयोगवान प्रतिलोम सन्तान भयो । बाँकी दुइ अम्बष्ठ र यवनचाहिँ अनुलोम भए ।

३५३. नीच जातका पुरुषहरूबाट उच्च जातका स्त्रीहरूमा उत्पन्न गराइने जो पुत्र आदि सन्तान हुन्, तिनलाई प्रतिलोमज भन्दछन् ।

श्वपाक आदि प्राणीहरू जो छन् ती वर्णशङ्कर हुन् । तिनको एक्काइसे समूह हुन्छ ।

३५४. ब्राह्मणबाट ब्राह्मणीमा जन्मिएको सन्तान सवर्ण हो । ब्राह्मणबाट क्षत्रियामा जन्मिएको सन्तान अनन्तर अम्बष्ठ भनिन्छ । ब्राह्मणबाट वैश्यामा उत्पन्न सन्तान उग्र भनिन्छ ।

३५५. ब्राह्मणबाट वैश्यामा स्त्रीमा उत्पन्न सन्तान एकान्तर दौष्यन्त हुन्छ। क्षत्रियबाट शूद्र स्त्रीमा जन्मिएको सन्तान निषाद हुन्छ ।

३५६. शूद्र जातिको स्त्री ब्राह्मणबाट पारशव सन्तान उत्पन्न गर्छिन् । अर्थात् ब्राह्मणबाट शूद्रामा उत्पन्न सन्तान द्वयन्तर पारशव कहलाउँछ ।

३५७. सबै वर्णहरूका अनुलोम सन्तान यिनै हुन् । ब्राह्मणबाट क्षत्रियामा जन्मिएको अनन्तर, वैश्यामा जन्मिएको एकान्तर, शूद्रमा जन्मिएको द्वयन्तर हुन्छ । एवं प्रतिलोममा शूद्रबाट वैश्यामा जन्मिएको अनन्तर, क्षत्रियामा जन्मिएको एकान्तर, ब्राह्मणी जन्मिएको द्वयन्तर हुन्छ ।

३५८. सूत, मागध, आयोगवान यी तीन थरी सन्तान नीच जातका पुरुषबाट उच्च जातकी स्त्रीमा उत्पन्न गराइने प्रतिलोम सन्तान हुन् र अब यसपछि बताइने सन्तान पनि यस्तै हुन् ।

३५९. ब्राह्मणीले वैश्यबाट वैदेहक भनिने एकान्तर सन्तान उत्पन्न गर्छिन् । क्षत्रिय जातिकी स्त्री शूद्रबाट क्षत्तानामक एकान्तर सन्तान उत्पन्न गर्छिन् ।

३६०. जहाँ ब्राह्मणी शूद्रमा झुम्मिन पुग्छिन् । त्यहाँ त्यस शूद्रबाट ती ब्राह्मणीमा वर्णशङ्कर भइकन चाण्डालनामक पापी द्वयन्तर प्रतिलोम सन्तान उत्पन्न हुन्छ ।

३६१. त्यस कारण राजाले वर्णशङ्कर हुनुबाट समाजलाई बचाउन स्त्रीहरूको विशेषरूपमा सुरक्षा गर्नुपर्छ ।

स्त्रीपुंसयोगनामक विवादपद समाप्त भयो ।

# दायविभाग प्रकरण

३६२. बाबुबाट प्राप्त भएको चल अचल सम्पतिलाई उनका छोराहरूले बण्डा गरेर लिनुलाई दायभाग (अशंबण्डा) भनिएको छ। अशंबण्डासम्बन्धी मुद्दा विद्वान्हरूद्वारा दायभागविवादपद भनिएको छ ।

३६३. पिताको देहान्त भएपछि उनको सम्पत्ति उनका छोराहरूले बाँडेर लिन् । आमाको मृत्युपछि स्त्रीधनमा उनका छोरीहरूको र छोरीहरू नभएमा उनीहरूका सन्तानको अधिकार हुन्छ ।

३६४. आमाको रज सुकिसकेपछि दिदी बहिनीहरूको विवाहदान भइसकेपछि, धन आदि भोग्य वस्तुमा लालचा हटिसकेको बाबु मोक्षमार्गमा लागिसकेपछि वा मरेपछि छोराहरूले उनको सम्पति बाँडेर लिन् । बाबुले आफ्नो उमेर छँदैमा आफ्नो सम्पति छोराहरूलाई बाँडिदिन् । बाँड्दा जेठालाई जेठाभाग दिन् अथवा उसको आफ्नो विचारअनुसार बराबर बाँडिदिन् ।

३६५. जसो गरे पनि जेठो दाजु बाबुबराबर हुन्छ । कान्छो अरू भाइभन्दा सशक्त छ भने उसैले जेठो भाग लिन्छ, किनभने कुलका सम्पत्तिहरू शक्तितर्फ लहसिने हुन्छन् ।

३६६. आफूले शूरो भएर कनाएको धन, पत्नीको पेवाधन एवं विद्यारूपी धन यी तीन प्रकारका धन र बाबुले निगाह गरेर दिएको धन बाँड्नुपर्दैन ।

३६७. आमाले पनि आफ्नो निजी पेवाधन जुन छोरालाई प्रेमपूर्वक दिन्छिन् त्यो पनि बाँड्नुपर्दैन। किनभने आमा पनि बाबुबराबर नै हुन् अर्थात् आमाको पनि आफ्ना धनमा पूर्ण स्वतन्त्रता हुन्छ ।

३६८. विवाहमा अग्निका सामु दिइएको धन (अध्यग्नि), छोरीलाई उनका पतिले आफ्ना घर लान लाग्दा दिएको धन (अध्यावहनिक), पतिले पेवा बनाउन दिएको धन, दाजुभाइबाट स्त्रीले प्राप्त गरेको धन, आमाले दिएको धन, बाबुले दिएको धन, यी ६ प्रकारका स्त्रीधन हुन्छन् ।

३६९. ब्राह्म, प्राजापत्य, आर्ष र दैव विवाह विधिहरूद्वारा गृहिणी हुन गएका स्त्रीहरूका उक्त प्रकारका धनहरू उनका शेषपछि उनका सन्तानले पाउने हुन्छन् । सन्तान रहेनछन् भने पतिले पाउँछ । बाँकी चार प्रकारका गान्धर्व, आसुर, राक्षस, पैशाच विवाह विधिले गृहिणी हुन पुगेका स्त्रीहरूका धनहरू उनीहरूका पिताले पाउने हुन्छन् ।

३७०. विद्या आर्जिन गएका दाजु वा भाइका जहानलाई जुन दाजु वा भाइले पालिदिन्छ त्यसले आफू मूर्खै भए तापनि विद्या आर्जिएर आएका दाजुभाइले त्यस विद्याका बलले कमाएका सम्पतिको हिस्सा पाउँछ ।

३७१. अंशियार दाजुभाइहरूमध्ये कुनै भाइ विद्वान् छ र उसले पैतृक धनलाई आधार नमानी आफ्नै विद्याका बलले धन कमाएको छ र

ऊ त्यो धन भाइअंश गर्न चाहँदैन भने भाइहरूलाई नदिए हुन्छ ।

३७२. बाबुले स्वयं आफ्नो सम्पतिको अंशबण्डा गर्दा आफूलाई समानरूपले बाँडेका दुई अंश राख्नू । उनकी पत्नी (छोराहरूकी आमा) पतिको शेषपछि छोराहरूसरह नै अंश पाउने हुन्छिन् ।

३७३. अंश गर्दा जेठा छोरालाई अरूभन्दा बढी र सबैभन्दा असल छोरालाई केही बढी एवं बाँकी अरू छोरा र विवाह नभएकी बहिनी (छोरी) लाई बराबर गरिदिनू ।

३७४. दाजुभाइ आदि नातादार वा अरू कसैकी पत्नीमा उनका अभिभावकका धर्मशास्त्रानुकूल नियोगद्वारा उत्पन्न गराउने सन्तानलाई क्षेत्रज भन्दछन् । धर्मशास्त्रको अनुमतिअनुसार नै परपत्नीमा उत्पन्न त्यस्ता पुत्रहरूमा पनि पहिले भनिएअनुसार नै अंशबण्डा गर्नू । आफूभन्दा तल्ला जातका विवाहित स्त्रीहरूमा उत्पन्न पुत्रहरूमा क्रमशः अंश कमकम दिनू ।

३७५. अंशियार छोराहरूका पिताले नै आफ्ना छोराहरूमा धेरथोर गराएर अंश बाँडे भने पनि जसले जति पाउँछ, त्यसले त्यतिमै सन्तुष्ट रहनुपर्छ त्यही धर्म हो, किनभने बाबुको सबै छोराहरूमा संप्रभुता हुन्छ ।

३७६. विवाह नगरेकी कन्याबाट जन्मिएको पुत्र, अरूले गर्भिणी गराएकी स्त्रीलाई विवाह गरेर त्यसबाट जन्मिएको पुत्र वा जारी गरेकी

स्त्रीमा जन्मिएको पुत्र यी सबको भरणपोषण पिताले गर्नुपर्छ । उसले कमाएका धनका यी सब अंशियार हुन्छन् ।

३७७. विवाह नगरेकी कन्या आमाबाट जन्मिएको, बाबुको पत्ता नलागेका छोराले मातामहलाई नै पछयाउनू र उनकै क्रियाकाज गरी अंश खानू ।

३७८. अभिभावकहरूले सन्तानप्राप्तिका निमित्त नियुक्त नगरिएकी स्त्रीमा एक वा अनेक पुरुषहरूले सन्तान उत्पन्न गराए भने तिनीहरूले अंश पाउँदैनन् । ती सन्तानचाहिँ जसजसको वीर्यबाट जन्मिएका हुन् तिनतिनकै हुन्छन् ।

३७९. जसकी आमालाई बाबुले शुल्क वा जारी तिरेर ल्याएको छ त्यस्ता छोराले जसको वीर्यबाट उसको जन्म भयो, त्यही बाबुको क्रियाकाज पिण्ड गर्नू । शुल्क नतिरी ल्याएकी आमाबाट जन्मिएका छोराले जसको वीर्यबाट ऊ जन्मिएको छ, त्यसको क्रियाकाज गर्नुपर्दैन, जसले उसलाई पालेको छ, त्यसको क्रियाकाज गर्नू ।

३८०. बाबुको द्वेष गर्ने, कुकर्म गरेर पतित भएको, नपुंसक र अरूबाट जन्मिएको यस्ता सन्तान जातभात मिल्दा भए तापनि अंश पाउँदैनन् । अरूका पत्नीमा उत्पन्न सन्तानको त कुरै भएन ।

३८१. लामो एवं कडा रोग लागेका, लाटा, पागल, अन्धा र लङ्गडा यस्ता सन्तान कुलमा जन्मिन गए भने तिनको पालनपोषण गर्नुपर्छ । त्यस्ताका सन्तान पनि अंशियार हुन्छन् ।

३८२. यी दुइथरी बाबु- जन्म दिने र पालनपोषण गर्नेले, हुर्काएका सन्तानहरूले उक्त दुवैथरी बाबुहरूलाई अलगअलग पिण्डपानी दिनुपर्छ एवं गर्भाधान गर्ने र पालनपोषण गर्ने ती दुवैथरी बाबुबाट आधाआधा अंश यिनले लिनू ।

३८३. सगोलमा बसेका अंशियार दाजुभाइहरूमध्ये जजसको जे जति दायभाग छ, त्यो त्यसत्यसको हुन्छ । परन्तु तिनमा पनि जो निःसन्तान छ, त्यो विचारणीय हुन्छ, किनभने निर्वीर्य (प्रजननशक्ति नभएको) व्यक्तिमा दिइएको अंश अन्यत्र जाने हुन्छ ।

३८४. अंश लिएका धेरै दाजुभाइमध्ये कुनै सन्तान नहुँदै मऱ्यो वा सन्यासी भयो भने उसकी पत्नीको पेवाधनबाहेक बाँकी उसको धन अरू दाजुभाइहरूले बाँडेर लिनू ।

३८५. उक्त अवस्थाका भाइको धन बाँडेर लिएपछि लिने भाइहरूले उसकी पत्नी पतिको सतमा बसिन् भने उनी बाचुञ्याल भरणपोषण गर्नुपर्छ ।

३८६. उक्त किसिमका वा सन्यास लिने भाइका छोरीमात्र रहेछन् भने उनका बाबुको अंश विवाह नभएसम्म उनीहरूकै भरणपोषणमा लगाइदिनुपर्छ । विवाह भएपछि उनका पतिले उनलाई पाल्नुपर्छ ।

३८७. सन्तान नहुँदै पति परलोक भएका महिलाहरूको पतिका पक्षका देवर-जेठाजु आदि प्रभु हुन्छन्, उनलाई नियोग गराउने नगराउने उनको भरणपोषण आत्मरक्षा सबै उनीहरूकै जिम्मा हुन्छ ।

३८८. पतिको कुल खिइसकेको रहेछ, त्यहाँ कुनै व्यक्ति कुनै आश्रय केही रहेनछ, उनका सपिण्ड बन्धुहरू पनि रहेनछन् भने त्यस्ती स्त्रीले आफ्ना माइतीको आश्रय लिनुपर्छ, उनका अभिभावक उनीहरू नै हुन्छन् ।

३८९. पतितर्फ कोही बाँकी छैन, माइतीतर्फ पनि कोही बाँकी छैन भने त्यस्ता निराश्रय स्त्रीहरूको भरण-पोषण राजाले गर्नुपर्छ भनेर शास्त्रले बताएको छ । राजाले उनको भरणपोषण गर्नू र नीच काम गरी पतित भएमा उनलाई दण्ड पनि दिनू ।

३९०. बिलकुल स्वाधीन रहँदा ठूलो कुलमा जन्मिएका स्त्रीहरू पनि नराम्रोसँग नासिन्छन्, त्यस कारण ब्रह्माजीले स्त्रीहरूलाई स्वाधीन नराख्ने नियम बनाएका छन् ।

३९१. कुमारी अवस्थामा स्त्रीहरूलाई उनका पिताले सुरक्षित राख्छन्, जवानीमा उनका पतिले उनलाई सुरक्षित राख्छन्, विधवा भएमा छोराले उनलाई सुरक्षित राख्छन् । यिनकै आडभरोसामा उनले रहनुपर्छ । स्त्रीहरू स्वाधीन हुन बिलकुल लायक हुँदैनन् ।

३९२. अंशवण्डा गर्दा बाबुको जायजेथा जे-जति छ, त्यसबाट बाबुले लिएको ऋण तिरीदिएर बचेको मात्र अंशियारहरूले बाडेर लिनु, बाबुलाई ऋणी राख्नु हुदैन ।

३९३. जुन अंशियार दाजुभाइहरुको विवाह व्रतबन्ध आदि संस्कारविधिहरू बाबुले गरिदिएका छैनन्, तिनीहरूका ती विधिहरू पनि सबै दाजुभाइहरूले त्यही पैतृक धनबाट क्रमशः गरिदिनुपर्छ ।

३९४. पैतृक सम्पत्ति बचेको छैन भने पूर्वोक्त संस्कारहरू भइसकेका दाजुहरूले आफूले पाएका अंशबाट सम्पत्ति निकालेर पनि असंस्कृत भाइहरूका संस्कारहरू अवश्य गरिदिनुपर्छ ।

३९५. आफ्ना पोष्यवर्गको परिपालनका लागि कसैले उत्साहित भएर कुनै उद्योग गर्न लागेमा अरू बाँकी भाइहरूले यथाशक्ति भोजन वस्त्र वाहनहरू दिएर उसको उत्साह बढाइदिनुपर्छ ।

३९६. अंशबण्डा गर्दा गर्नुपर्ने धर्म ठीकसँग गरियो गरिएन भन्ने सन्देह भएमा अंशियारहरूको निर्णयअनुसार अरू बन्धुहरूले अंशबण्डाको लिखतबाहेक भिन्नै बयान लेखिराख्नू ।

३९७. दाजुभाइ भिन्न नभएसम्म उनीहरूका देवकार्य पितृकार्यजस्ता धर्म पनि एउटै हुन्छन् । भागबण्डा गरी छुट्टिएपछि उनीहरूका देवकार्य पितृकार्य आदि, पनि अलगअलग हुन्छन् ।

३९८. दान दिनु लिनु, पशु अन्न घर खेतहरूको आदान प्रदानजस्ता व्यवहार र देवपूजा, भान्सा, तर्पण, बली र वैश्वदेवजस्ता धार्मिक क्रियाहरू एवं आम्दानी खर्च छुट्टिएका भाइहरूले अलगअलग नै गर्नुपर्छ ।

३९९. सहोदर भाइहरूमध्ये एउटाले परस्परमा अर्काको साक्षी बस्ने, जमानी बस्ने, ऋण लिने-दिनेजस्ता कुराहरू नछुट्टिएसम्म गर्न हुँदैन, छुट्टिएपछि हुन्छ ।

४००. अंशियारहरू दाजुभाइका साक्षी बस्ने र जमानी बस्ने आदि पूर्वोक्त क्रियाहरू भएमा दुनियाँमा त्यस्ता व्यक्तिलाई उनीहरूको अंशबण्डासम्बन्धी लिखतविना पनि अन्य व्यक्तिहरूले उनीहरूलाई भागबण्डा गरी अलग बसिका भनी बुझ्छन् ।

४०१. एउटै बाबुबाट जन्मिएका धेरै सन्तानहरू विभिन्न धर्म र विभिन्न पेशालाई अँगालेका हुन्छन् भने विभिन्न पेशागत काम र गुणहरूले युक्त भएका ती सन्तानहरू गर्नुपर्ने कर्तव्य कार्यहरूमा अवश्य एकमत हुन सक्तैनन् । आफूले अंशबण्डामा पाएको पैतृक सम्पत्तिको भाग उनीहरू दान गर्न, बेच्न वा अरू नै कुनै काममा उपयोग गर्न पनि सक्तछन् । उनीहरू अंशबण्डाबाट प्राप्त पैतृक धनका सम्पूर्ण रूपमा स्वामी हुन्छन् ।

४०२. पुत्रहरू बाह्र प्रकारका हुन्छन्- (१) सजातीय विवाहिता धर्मपत्नीमा आफ्नै वीर्यबाट उत्पन्न भएको (२) भ्रातृजाया आदिमा नियोजनपद्धतिद्वारा आफ्न वीर्यबाट जन्मिएको (३) छोरीको छोरा (४) अविवाहित कन्यामा आफूबाट उत्पन्न (५) अरूबाट गर्भिणी भएर आफूसँग विवाह गरेपछि जन्मिएको (६) गुप्त प्रेमसम्बन्धबाट गुप्तरूपमै जन्मिएर बढेको (७) आफूसँग दोस्रो विवाह गर्ने स्त्रीबाट जन्मिएको (८) बाबुआमा दुवैले उपेक्षा गरी

त्यागेको (९) अचानक फेला परेको (१०) उसका बाबु आमालाई रुपैयाँ दिएर किनेको (११) छोरोबराबर गराएर पालेको (१२) म तपाईंहरूको छोरोसरह भएर सेवा गर्छु भनी आफैं आएको ।

४०३. यी १२ प्रकारका पुत्रहरूमध्ये ६ प्रकारका छोराहरू बाबुका सम्पतिको अंश पाउने र ६ प्रकारका नपाउने हुन्छन् । तिनमा पहिलेपहिलेका उत्तम र पछिपछिका निन्दित हुन्छन् ।

४०४. बाबुको देहान्त भएपछि यस प्रकरणमा बताइएका सबै किसिमका छोराहरूले क्रमशः पैतृक धन प्राप्त गर्छन् । उक्त क्रममा पहिलापहिला प्रकारका छोराहरू नभएमा पछिपछिका प्रकारका छोराहरू पैतृक धन प्राप्त गर्न लायक हुन्छन् ।

४०५. छोरा छैनन् भने छोरीहरू बाबुका छोरा जत्तिकै सन्तान हुनाले पैतृक धन प्राप्त गर्छन् । किनभने छोरा-छोरी दुवैले बाबुको सन्ततिपरम्परा चलाउने गर्छन् ।

४०६. छोरी पनि छैनन् भने एकै कुलका बान्धवहरूले अपुताली पाउँछन् । ती कोही नभए त्यस्ताको धन राजकोषमा जम्मा हुने हुन्छ ।

४०७. राजाले धार्मिक मान्यताको कदर गर्दै यस्तो अपुताली धन राजकोषमा जम्मा गर्न लगाउँदा ब्राह्मणबाहेक अरू जातिको अपुताली धनमात्र राजकोषमा जम्मा गराउन् । उनको कर्तव्य

के हो भने (निराश्रित) स्त्रीहरूलाई जीवन (जीविका) दिनू । यो अंशबण्डासम्बन्धी विधि हो ।

दायविभाग नामको विवादपद समाप्त भयो ।

# साहस प्रकरण

४०८. बलका घमण्डले फुलेका व्यक्तिहरूले विचार नपुर्‍याई तुरुन्ततुरुन्त जुनसुकै काम गरे तापनि त्यो साहस भनिन्छ । साहस शब्दको अर्थ बल हो ।

४०९. साहस तीन प्रकारका हुन्छन् (१) प्रथम (२) मध्यम (३) उत्तम । अर्थात् प्रथमसाहस, मध्यमसाहस र उत्तमसाहस । शास्त्रहरूमा त्यसका अलगअलग लक्षणहरू बताइएका छन् ।

४१०. फल तरुल पानी आदि तोड्नु, थुत्नु, नष्टभ्रष्ट गर्नु, जमीनको साँधसीमा मिच्नु, खेती आदिका सामान नष्टभ्रष्ट पार्नु आदि प्रथमसाहस मानिएको छ ।

४११. कपडा, पशु, खाने पिउने चीजहरू, घरायसी सामानहरूलाई नष्टभ्रष्ट गराउने दुःसाहस गराउनु मध्यमसाहस भनिएको छ ।

४१२. विष हतियारजस्ता सामानको व्यापार गर्नु वा विष हतियारजस्ता वस्तु प्रयोगमा ल्याई मानिस मार्नु, अरूका पत्नीहरूलाई हातपात गर्नु र अरू प्राणघाती क्रियाकलाप गर्नु उत्तमसाहस मानिएको छ।

४१३. त्यसको दण्डव्यवस्था यस प्रकार छ- काम कति खतराजनक छ त्यसलाई विचार गरेर प्रथमसाहसमा सयभन्दा कम र मध्यमसाहसमा कम्तीमा पाँच सय दण्ड गर्नू । उत्तमसाहसका अपराधमा प्राणदण्ड, सर्वस्वहरण, शहरबाट निकालिदिने, यो

व्यक्ति यस्तो अपराधी हो भनेर डामेर चिनु लगाई छाडिदिने अथवा उसको कुनै अङ्ग काटिदिने यस प्रकारका दण्डहरू गरिन्छन् ।

४१४. यहाँ बताइएका दण्डहरूमा प्राणदण्डबाहेक अरू सबै दण्डहरू सबै जातका मनुष्यमा समानरूपले गर्नू । प्राणदण्डचाहिँ ब्राह्मणबाहेक अरू जातका व्यक्तिहरूलाई मात्र दिनू, किनभने ब्राह्मण मारिनलायक हुँदैनन् ।

४१५. ब्राह्मणले प्राणदण्ड पाउनलायक अपराध गरेमा उनलाई शिर मुडेर शहरबाट निकालिदिनू । उसका निधारमा यो व्यक्ति यस्ता कुकृत्यको अपराधी हो भनी खोपेर छोडिदिनू अथवा गदाहामा चढाएर घुमाइदिनू ।

४१६. प्रथमसाहस र मध्यमसाहसका अपराध गर्ने अपराधीहरू दण्ड भोगिसकेपछि लिनु-दिनु भावी व्यवहार गर्न सकिने हुन्छन् । उत्तमसाहसमा बताइएका अपराध गर्ने व्यक्तिहरू दण्ड भोगिसकेपछि पनि बोल्ने र भोजन गराउने आदि व्यवहारका लायक हुँदैनन् ।

४१७. उत्तमसाहसका अपराधहरूकै भेद चोरी हो । त्यसमा केही फरक देखिन्छ । आक्रमण गरी अरूका अधीनको वस्तु खोसेर उसको मनमा चिन्ता पैदा गराइदिनु आधि हो, छलकपटद्वारा अरूका अधीनको वस्तु आत्मसात् गरी उसको मनमा पीर उत्पन्न गराइदिनु स्तेय हो ।

४१८. त्यो साहस वा चोरी पनि लुटिले वा चोरिले द्रव्यलाई दृष्टिमा राखेर विद्वानहरूले तीन प्रकारको बताएका छन्। लुटिने वा चोरिने द्रव्य तुच्छ, मझौलो र उत्तम यस्ता तीन प्रकारका हुन्छन् ।

४१९. माटाका भाँडा, आसन, खाट, काठ, झार (तृण), कोसेबाली र तयारी खाना यी सब तुच्छ (क्षुद्र) द्रव्य हुन् ।

४२०. रेशमीबाहेकका अरू कपडा, गाईबाहेकका अरू पशु, सुनबाहेकका अरू धातु र धान एवं जौ मझौला द्रव्य हुन् ।

४२१. सुन, रत्न, रेशमी कपडा, स्त्री, पुरुष, गाई, हात्ती, घोडा तथा देवता, ब्राह्मण र राजाका स्वामित्व इत्यादिका द्रव्यहरू उत्तम हुन् । मस्तसँग निदाएका, मादक पदार्थ पिएर मातेका र नशा चढेका बेहोसी व्यक्तिहरूबाट विभिन्न प्रकारका उपायहरूद्वारा उनको स्वत्वको द्रव्य हत्याउनुलाई विद्वान्हरूले चोरी भनेका छन् ।

४२२. चोरी गरेको सामानसहित व्यक्तिलाई पक्रिएमा चोरेको प्रमाणित हुन्छ । औकातभन्दा बढी मात्रामा भोगचलन खर्चबर्च गरेको देखिएमा पनि यसले चोरेको हो भन्ने ठहर हुनसक्छ । चोरी डकैती गर्ने फटाहा व्यक्तिहरूसँग एक भई मिलेर काम गरेको देखनाले पनि यसले चोरेको हो कि भनी प्रमाणित गर्न सकिन्छ । फजूलसँग खर्च गरेको देखिनाले पनि त्यसले चोरेको प्रमाणित हुनसक्छ ।

४२३. चोरी गर्दै हिंड्ने व्यक्तिहरूलाई गाँस वास दिने व्यक्तिहरू र त्यस्ता व्यक्तिहरूलाई अँचेट्न सक्ने सामर्थ्य राखेर पनि उनीहरूलाई उम्कन दिने व्यक्तिहरू पनि त्यसमा मुछिन जान्छन्।

४२४. प्रथम, मध्यम र उत्तम यी तीन प्रकारका साहसहरूमा विद्वान्हरूद्वारा जुन दण्डव्यवस्था बताइएका छन्, क्षुद्र, मध्यम र उत्तम द्रव्यहरूको चोरीमा पनि क्रमशः तिनै दण्ड गर्नुपर्ने हुन्छ।

४२५. गाई आदि जनावरहरू हराएमा र धनमालको चोरी भएमा त्यससम्बन्धी विशेष जानकारी राख्ने व्यक्तिहरूले पाइला आदि चिह्नहरूबाट खोजतलास गर्नू । गाउँ, गोठ, एकान्त स्थानमा जहाँ पाइला परेका हुन्छन्, त्यस गाउँ वा गोठका व्यक्तिले त्यसको हर्जाना बेहोर्नुपर्छ ।

४२६. एकान्त स्थानको बाटो अड्याङबड्याङ भई गाई आदिका पाइला नचिनिने भएमा वा तितरबितर भएमा वा टुटेमा त्यसको आसपासमा जुन गाउँ वा गोठ छन्, तिनलाई त्यसको हर्जाना तिराउनू ।

४२७. पहिलेदेखि नै चोरीमा ख्याति प्राप्त गरिसकेको पटके चोर वा यस्ता व्यक्तिहरूसँग लागेको धेरैजसो चोरै भइसकेको अपवित्र व्यक्ति मार्गमा फेला पर्न सक्छन् । त्यस कारण प्राणिघातक वा चाण्डालजस्ता रात्रिमा घुम्ने रमन वा जासुसहरूले त्यस्ता

व्यक्तिलाई गाउँ वा शहर जहाँ छन् त्यहाँबाट बाहिर निकालिदिनू ।

४२८. राजाले कसैको धनमाल चोरी हुनासाथ तदारुकतासँग तुरुन्त चोर पत्ता लगाई तिनबाट हराएको धन फिर्ता गराउनुपर्छ । चोर्ने पत्ता लागेनन् भने राजकोषबाट दुनियाँलाई हर्जाना दिनुपर्छ । दुनियाँको धनमाल चोरी हुँदा राजा वास्तै नगरी रहन्छन् भने त्यस दुष्कर्मको पाप राजा स्वयंले बेहोर्नुपर्छ एवं उनी धर्म अर्थ यी दुवै पुरुषार्थबाट छोडिन्छन् पनि ।

साहस नामको विवादपद सिद्धियो ।

# वाक्पारुष्य दण्डपारुष्य प्रकरण

४२९. कसैलाई होच्याउन उसको देश जात कुल आदिका बारेमा दोषयुक्त एवं अपमानजनकरूपमा विपरीत अर्थवाला आक्रोशितरूपको जुन बोलीको प्रयोग गरिन्छ, त्यसलाई वाक्पारुष्य भनिन्छ ।

४३०. निष्ठुर, अश्लील र अत्यन्त कडारूपमा प्रयोग गरिने हुनाले उक्त वाकपारुष्य तीन प्रकारको भनिएको छ । त्यसको महत्तालाई दृष्टिमा राखेर ती तीन प्रकारका वाक्पारुष्यका दण्ड पनि क्रमशः ओजनदार हुन्छन् ।

४३१. आक्षेप लगाएर बोलेको वाक्यलाई निष्ठुरपारुष्य भन्दछन् । दोषयुक्त एवं तिरष्कारजनक शब्दको प्रयोग गरी बोलेको वाक्यलाई अश्लीलपारुष्य भन्दछन् । पतित गराउने खालका निन्दित वाक्यको प्रयोग गरी बोलेको बोलीलाई विद्वान्हरू तीव्रपारुष्य भन्दछन् ।

४३२. हात-गोडा अर्थात् मुक्का लात्ती हतियार आदिद्वारा अरूका शरीरमा द्रोह गर्नु, जाइलाग्नु, अरूका शरीरमा तातो खरानी खन्याइदिनु जस्ता क्रियालाई दण्डपारुष्य भन्दछन् ।

४३३. मुक्का, लात्ती, हतियार, लट्ठी उभ्याउने कार्यमात्रद्वारा शत्रुलाई भयभीत गराउनु, निष्फक्रीरूपमा उसका शरीरमा तिनको प्रयोग गर्नु र घाउ नै लगाउनु जस्ता क्रियाकलाप देखिने हुनाले

दण्डपारुष्य पनि क्रमशः उत्तम, मध्यम र अधम ती प्रकारका हुन्छन् ।

४३४. हीन, मध्यम र उत्तम यस्ता तीन प्रकारका उपकरणहरूलाई आवेशमा आएका अवस्थामा थुतेर काममा ल्याउने साहस पनि तीनै प्रकारका हुन्छन् । त्यसमा कण्टकशोधन (काँडा निकाल्ने कान अर्थात् शत्रुलाई निर्मूल गराउने विधि) अपनाइन्छ ।

४३५. त्यस्तो कण्टकशोधनविधि उक्त दुवै प्रकारका साहसहरूमा पाँच प्रकारको हुन्छ । त्यसमा दण्डभागी व्यक्ति त्यसबेला सम्बद्ध भएको हुनुपर्छ र त्यसपछि उसले सफाइ पाउँछ ।

४३६. अकस्मात् आवेशमा आएर झगडा गर्नेहरूलाई दण्ड दिनुपर्छ ।

४३७. क्रूरतासँग एकसाथ भिड्ने ती दुवै पक्षमा अपराधका मात्राको कम बेशी केही देखिँदैन भने दुवैलाई समान दण्ड गर्नू ।

४३८. झगडा गर्ने दुइ थरीमा पहिले तथानाम गाली गर्ने व्यक्ति निश्चित रूपमा दण्डनीय हुन्छ । पछिबाट झगडा गर्न आउने व्यक्तिले पनि शिष्टतापूर्ण व्यवहार गरेन भने त्यो पनि दण्डनीय हुन्छ । तर पहिले झगडा शुरू गर्ने व्यक्तिलाई भने बढी दण्ड दिनुपर्दछ ।

४३९. दुवै थरीले बराबर आपत्तिजनक कुरा बोलेको वा त्यस्तो कसूर गरेमा अमुकले मेराविरूद्ध यस्तो आपत्तिजनक कुरा बोल्यो वा त्यस्तो कसूर गर्‍यो भनी जो उजूर गर्न आउँछ, पहिले अपराध

बोल्ने वा गर्ने वा पछि बोल्ने गर्ने जे भए पनि उही दण्डको भागी हुन्छ ।

४४०. श्वपाक (पतित जातिको पुरुष), नपुंसक (षण्ड), चाण्डाल, विकलाङ्ग, व्याधा, माहुते, व्रात्य (संस्कारहीन) र गुरु आचार्यमा अतिक्रमण गर्ने (मर्यादा नाघ्ने) व्यक्तिलाई तुरुन्त मारिदिनू । यही त्यस अपराधको दण्ड हो । यस्ता व्यक्तिको बधलाई विद्वान्हरूले दण्डपारुष्यको दोष भनेका छैनन् ।

४४१. नीच व्यक्तिले स्वयं नीच भएर मनुष्यमध्ये जुन व्यक्तिमा अतिक्रमण (मर्यादारहित काम) गर्दछ, त्यसलाई त्यही अतिक्रमण गरिएका व्यक्तिले स्वयं दण्ड दिनू । त्यसलाई राजाले दण्ड दिनुपर्दैन अर्थात् यस्तो मामला राजासम्म पुऱ्याइरहने जरुरतै छैन ।

४४२. यस्ता नीच व्यक्तिहरू मनुष्यका मलस्वरूप हुन् । यिनीहरूको धनजेथा पनि मलस्वरूप नै हुन्छ । त्यस कारण राजाले त्यस्ता व्यक्तिलाई प्राणदण्ड नै दिनू, अर्थदण्ड मात्र गरेर नछोड्नू ।

४४३. क्षत्रियले ब्राह्मणलाई दुर्वाच्य बोलीद्वारा गाली गरेमा त्यस्तो क्षत्रिय १०० पणको दण्डभागी बन्दछ । वैश्यले ब्राह्मणलाई त्यस्तो गाली गरेमा त्यो वैश्य १५० पणको वा २०० पणको दण्डभागी हुन्छ । शूद्रले ब्राह्मणलाई त्यस्तो गाली गरेमा उसले मृत्युदण्ड नै पाउँछ ।

४४४. ब्राह्मणले क्षत्रियलाई दुर्वाच्य बोली गाली गरेमा उसलाई ५० पण दण्ड गर्नू । ब्राह्मणले वैश्यलाई त्यस्तो गाली गरेमा २५ पण उसलाई दण्ड गर्नू । ब्राह्मणले शूद्रलाई त्यस्तो गाली गरेमा उसलाई १२ पण दण्ड गर्नू ।

४४५. द्विजाति अर्थात् ब्राह्मण, क्षत्रिय र वैश्य मध्ये समानवर्णका व्यक्तिले समानवर्णका व्यक्तिमा अतिक्रमण गरेमा त्यस्तो अतिक्रमण गर्नेलाई १२ पण दण्ड गर्नू । भन्न नहुने कुरा बोली विवाद गरेमा त्यसको दुइ गुणा अर्थात् २४ पण दण्ड गर्नू ।

४४६. कानु या खोरण्डो अथवा यस्तै प्रकारका अरू विकलाङ्ग व्यक्तिलाई ए काना ! ए खोरण्डा ! भनेर गाली गरेमा त्यो तथ्यै भए पनि त्यस्तो गाली गर्ने व्यक्तिलाई कम्तीमा १ कार्षापणमा नघटाई दण्ड गर्नू ।

४४७. शास्त्रको आदेशअनुसार आफूले गरेका पापको प्रायश्चित्त गरिसकेका पापीको त्यही पापसँगको सम्बन्ध जोडेर बदनाम नगर्नू । एवं कुनै विशिष्ट अपराधमा राजदण्ड भोगिसकेका व्यक्तिको त्यही अपराधसँग जोडेर थप बदनामी नगर्नू ।

४४८. यस दुनियाँमा दुई किसिमका व्यक्तिको निन्दा गर्न हुँदैन । तिनका वध पनि गर्न हुँदैन । तिनमा एक ब्राह्मण हुन्, दोस्रा राजा हुन् । किनभने यी दुई व्यक्तिहरूले नै यस विश्वलाई मर्यादितरूपमा धारण गरेका हुन्छन् ।

४४९. पतित व्यक्तिलाई पतित भनेर सम्बोधन गर्दा र चोरलाई चोर भन्दा सामान्य अपराध हुन्छ । पतित नभएकालाई पतित भनेमा र चोरी नगर्नेलाई चोर भनेमा दोबर अपराध हुन्छ ।

४५०. नीच वर्णमा जन्मिएको व्यक्तिले ब्राह्मण, क्षत्रिय र वैश्य वर्णका व्यक्तिहरूको द्रोहपूर्वक नाम वा जातको उल्लेख गरेमा १८ अङ्गुल लामो फलामको कीलो उसको जिब्रोमा गाडिदिनू ।

४५१. आफू जान्ने सुन्ने भएका घमंडले शूद्रले द्विजातिमा धर्मको उपदेश गर्न लागेमा राजाले उसका मुख र कानमा तातो तेल खन्याउन लगाइदिनू ।

४५२. तल्लो जातको व्यक्ति आफ्ना जुन अङ्गले ब्राह्मणको उपकार वा उनकाप्रति अपराध गर्दछ, त्यसको त्यो उपकार गर्ने अङ्ग काटिदिनू, त्यसो गर्नाले त्यो शुद्ध हुन्छ ।

४५३. तल्लो जातका व्यक्तिले ब्राह्मण वा आफूभन्दा उत्कृष्ट जातका व्यक्तिको समान आसन चाहेमा उसलाई कम्मरमा डामेर देशनिकाला गर्नू अथवा त्यसका कम्मरका मासुका दुइ लुँदा काटिदिनू ।

४५४. नीच जातका व्यक्तिले आफूभन्दा ठूलो जातका व्यक्तिमा घमण्डले फुलेर थुकिदिएमा राजाले उसका दुवै ओठ कटाइदिनू, पिशाब गरिदिएमा लिङ्ग छेद गराइदिनू, दिसा गरिदिएमा उसको गुदद्वार कटाइदिनू ।

४५५. जगल्ट्याएमा दुवै हात कटाइदिनू, गोडा पक्रिएर कष्ट दिएमा वा दाह्री वा नाक समाएर तानेमा वा गर्धन वा गला वा अण्डकोष अँठ्याएमा पनि उसका दुवै हात काटिदिनू ।

४५६. छाला खोस्रिदिएमा वा रगत आउने गरी चोट लगाएमा १०० पण जरीवाना गर्नू । मासु लुछेमा ६ निष्क दण्ड गर्नू, हड्डी फुटाएमा देशनिकाला गर्नू ।

४५७. मर्यादितरूपमा आफ्ना कर्तव्यमा रहेका राजालाई नराम्रोसँग गाली गर्नेलाई उसको जिब्रो काटिदिएमा वा सर्वस्वहरण गरिदिएमा ऊ शुद्ध हुन्छ ।

४५८. कुनै दुर्बुद्धि नीच व्यक्तिले अपराध गरेका राजामा पनि प्रहार गरेछ भने त्यो सयौं ब्रह्महत्याभन्दा पनि ठूलो पाप हुनाले त्यस्ता पापी व्यक्तिलाई शूलमा रोपेर आगोमा पकाउनू ।

४५९. छोराका अपराधले बाबु र घोडा, कुकुर तथा वानरका अपराधले उनका मालिकहरू दण्डभागी हुँदैनन् । परन्तु बाबुले छोरालाई र मालिकले घोडा, कुकुर र वानरलाई त्यस्तो अपराध गर्न लगाएका रहेछन् भने ती सबै दण्डभागी हुन्छन् ।

वाक्पारुष्य दण्डपारुष्य नामको विवादपद सिद्धियो ।

# घूतसमाह्वय प्रकरण

४६०. कौडा, शिशाका टुक्रा, पाशा र शलाका आदिले जूवा खेल्नु वा बाजी राख्नु, पंक्षी र साढेहरू जुधाएर जसकाले जित्छ उसलाई बाजी तिर्नु यी सब घूतसमाह्वयनामक विवादपदमा पर्दछन् ।

४६१. जुवा खेलाउनेले खेल्ने जुवाडेहरूलाई उनीहरूलाई चाहिएको धन दिनू र जित्नासाथ तुरुन्त १० प्रतिशत ब्याजसहित असूल-उपर गर्नू ।

४६२. बाजीमा यदि खेलाडीहरू दाउ चिन्ने छन् भने दुई पटक अभ्यास गरिएका कौडाहरू खालमा गिर्छन् । त्यसमा एउटा जुवाडेले हार्छ । जुवामा कसले जित्यो, कसले हाऱ्यो भन्ने कुरामा शङ्का भएमा जुवाडेहरूले त्यहाँ तमासा हेर्न बसेका अरू जुवाडेहरूमा नै निर्णयका लागि भर पर्नुपर्छ । जुवाडेका दर्शक भने पनि साक्षी भने पनि सबै तिनै हुन् ।

४६३. कपटी जुवाडेले आफ्नो अभीष्ट सिद्धिका लागि अरू जुवाडे जमातलाई निर्णायक गराउन मिल्दैन । विरोधी जुवाडेलाई पिट्न पनि हुँदैन, आफ्ना इष्ट व्यक्तिबाट दिनुपर्ने कुरा दिलाउनू ।

४६४. कपटी पाशा बनाउन जान्ने कूट जुवाडेहरूलाई गलामा अक्षमाला लगाएर जुवाका खालबाटै बाहिर निकालिदिनू, यिनीहरूको दण्ड त्यही हो ।

# प्रकीर्णक प्रकरण

४६५. यस प्रकीर्णक प्रकरणमा राजाद्वारा गरिने व्यवहारको विषयमा बताइन्छ । राजाको आज्ञाको प्रतिपालन र त्यसको उल्लङ्घनको परिणामको बारेमा पनि बताइन्छ ।

४६६. शहरनिर्माणको लागि अनुमति तथा आर्थिक सहयोग, दुनियाँको विभाग, पाखण्ड, नैगम, श्रेणी, गणहरूसम्बन्धी व्यवहार, बाबु छोराबीचको झगडा, प्रायश्चित्तको उल्लङ्घन, आश्रमवासीहरूलाई दिइने सुविधा र दण्ड, वर्णसङ्करदोष, वर्णसङ्करको वृत्तिको नियम आदि अघिल्ला प्रकरणमा नलेखिएका कुरा यस प्रकीर्णक प्रकरणमा लेखिन्छन् ।

४६७. राजाले सावधान भएर ब्रह्मचर्य, गार्हस्थ्य र सन्यास यी सबै आश्रमहरूका मर्यादाको परिपालन शास्त्रहरूमा बताइएका साम, दान, भेद, दण्ड यी चार उपायहरूद्वारा गर्नुपर्छ एवं यिनै चार उपायहरूद्वारा दुनियाँदारमा पनि मर्यादा कायम राख्नुपर्छ । जुनजुन जाति आफ्ना निर्दिष्ट मर्यादाबाट तलतिर गिर्दै वा धेरै माथि उठ्तै जान्छ, आफ्नो शास्त्र निर्दिष्ट मर्यादाबाट चुकेका ती जातिलाई राजाले उनका आफ्ना मर्यादाभित्र राख्नुपर्छ ।

४६८. आफूभन्दा पूर्ववर्ती वा समकालिक अरू राजाले अज्ञानद्वारा न्यायरहित कार्य गरेका रहेछन् भने त्यस अन्यायपूर्ण कार्यलाई पनि फेरि न्यायमार्गमा रखाउनू ।

४६९. राजाले कसैको सर्वस्वहरण गर्नुपर्ने परिस्थितिमा पनि यी यहाँ निर्दिष्ट व्यक्तिहरूका यहाँ निर्दिष्ट सामानहरू हरण गर्न हुँदैन । जस्तै हतियार चलाएर जीविका गर्ने व्यक्तिका हतियारहरू, सीपको काम गर्ने कालीगढका शिल्पसामग्रीहरू, वेश्यावृत्ति गर्ने महिलाका गहनागुरियाहरू, वाद्यवादकका बाजाहरू एवं जुनजुन कालीगढ जुनजुन साधनहरूले आफ्नो जीविका गर्छन्, ति सामानहरूलाई पनि हरण गर्नुहुँदैन ।

४७०. राजाले आआफ्नो वर्णधर्मबाट स्खलित हुनेहरूलाई आआफ्नो वर्णधर्ममा राख्न कारवाही गर्नू ।

४७१. शास्त्रहरूमा नबताइएका अरू पापपूर्ण कार्यहरू भए गरेमा राजाले आफनो कर्तव्यलाई दृष्टिमा राखेर दुष्ट व्यक्तिहरूलाई दण्ड गराउनू ।

४७२. वेद र धर्मशास्त्रमा विरोध पर्ने र प्राणीहरूको हित पनि नहुने क्रियाकलापहरू पहिलेदेखि चलिआएका रहेछन् भने पनि राजाले तिनलाई रोकिदिनू ।

४७३. दुइगोडे (मनुष्य) हरुका लागि राजा र ब्राह्मण आदि अनन्त हुन्छन् । राजा दीप्तिमान् हुन्छन् । ब्राह्मण पवित्र हुन्छन् । राजा दीप्तिमान् हुनाले र ब्राह्मण पवित्र हुनाले यी दुइथरी व्यक्तिहरू आआफ्ना कर्तव्यबाट चुकेका छैनन् भने यिनलाई कसैले निर्देशन दिने पनि आवश्यकता छैन, यिनको निन्दा गर्न पनि हुँदैन ।

४७४. आआफ्ना कर्तव्यबाट चुकेका सबै वर्णका मनुष्यहरूमा राजाले दण्डको व्यवस्था गरेनन् भने सारा दुनियाँको विनाश हुन्छ ।

४७५. दण्डधारी राजाको अभावमा ब्राह्मणले ब्राह्मणत्व गुमाउँछ भने क्षत्रियले क्षत्रियत्व त्यागिदिन्छ । वैश्यले पनि आफ्नो कर्तव्य कर्म छोडिदिन्छ । यस्तो परिस्थितिमा शूद्रले विशिष्टता हासिल गर्दै जान्छ ।

४७६. राजाले पृथ्वीमा दण्ड धारण गरेनन् भने बलिया व्यक्तिहरूले निर्धा व्यक्तिहरूलाई माछालाई शूलमा पकाए झैं पकाउँछन् ।

४७७. सधैं सज्जनहरूमा निगाह गर्नु, दुर्जनहरूलाई दण्ड दिनु, शास्त्रले बताएको राजाको धर्म यही हो । शत्रुलाई अँचेटेर प्राप्त हुन आउने आय नै उनको अर्थ हो ।

४७८. यस दुनियाँलाई सधैं जलाएर पनि जसरी अग्नि पापले लेपिँदैन, ठीक त्यसैगरी दण्ड गर्नुपर्ने व्यक्तिलाई दण्ड दिएर राजा पापले लेपिँदैनन् ।

४७९. हुकूम गर्नु नै राजाहरूको तेज हो । त्यो वाणीमा रहेको हुन्छ । त्यस कारण असत्य वा सत्य जो तिनीहरू बोल्छन्, त्यही अरू व्यवहारी व्यक्तिहरूको धर्म हो ।

४८०. राजाको नाममा हजार आँखा भएका इन्द्रदेव नै पृथ्वीमा घुम्छन् । त्यस्ता व्यक्तिको हुकूम नाघेर दुनियाँ कहीँ पनि टिक्न सक्तैन ।

४८१. सम्पूर्ण राष्ट्रको रक्षा गर्ने अधिकार राजामा निहित हुनाले र राष्टमा सबभन्दा शक्तिशाली राजा नै हुनाले एवं प्राणीहरूमा दयापूर्ण व्यवहार गर्ने हुनाले पनि राजाबट जुन कामहरू हुन्छन्, ती प्रामाणिक हुन्छन् भन्ने मर्यादा छ ।

४८२. जसरी गुणहीन पति पनि स्त्रीहरूका निम्ति पूज्य हुन्छन्, त्यसैगरी गुणरहित राजा पनि दुनियाँका पूज्य हुन्छन् ।

४८३. राजाले दुनियाँलाई आफ्ना तपस्याले जितेको हुन्छ । यस कारण दुनियाँको मालिक राजा नै हो र दुनियाँले उनका हुकुममा रहनैपर्छ एवं दुनियाँले जीविका पनि राजाकै आश्रयबाट पाउँछन् ।

४८४. बेगिन्ती ओज भएका राजाहरू अग्नि, इन्द्र, चन्द्र, यमराज र कुबेर यी पाँच देवताका रूपहरूलाई धारण गर्दछन् ।

४८५. कुनै कारणले वा विनाकारणै रिसले चूर भएर जब राजा दुनियाँलाई जलाउन थाल्छन्, त्यसबखत उनी अग्नि भनिन्छन् ।

४८६. जब शत्रु परास्त गर्ने बलियो इच्छा लिएर हतियार उज्याई तेजस्वी बनेर शत्रुमा जाइलाग्छन्, त्यस बखत राजा इन्द्र भनिन्छन् ।

४८७. रिससन्ताप केही नलिई प्रसन्न मुद्रामा जब राजा दुनियाँको दृष्टिपथमा आउँछन्, तब उनी सोम (चन्द्रमा) भनिन्छन् ।

४८८. जब राजा राजकीय भेषमा धर्मासन (न्यायिक आसन) मा रहेर सबै प्राणीहरूमा समान सोचाइ राख्तै अपराधीतर्फ दण्ड उज्याउँछन्, तब उनी यमराज भनिन्छन् ।

४८९. जब राजा याचक, गरु, विशिष्ट विद्वान् र सेवक आदिमा दान बर्साउँछन्, त्यति बेला उनी धन दिने कुबेर भनिन्छन् ।

४९०. त्यस कारण दुनियाँले राजाको तिरष्कार नगर्नू, उनलाई गाली नगर्नू, फजूल कुरले नफुसल्याउनू, उनका हुकुममा रहनू, उक्त कुराको अतिक्रमण गर्नाले अतिक्रमण गर्नेको मृत्यु हुन्छ ।

४९१. राजाको कर्तव्य दुनियाँको रक्षा गर्नु, ज्ञानवृद्ध वयोवृद्ध अनुभववृद्धहरूको कदर गर्नु, व्यवहार हेर्नु र आफ्ना कर्तव्यमा जागरूक रहनु हो ।

४९२. राजाले सावधानीका साथ ब्राह्मणहरूको सेवा गर्नू, किनभने ब्राह्मणत्वसँग मिलेको क्षत्रियत्व दुनियाँको रक्षा गर्ने प्रमुख कारण हुन्छ ।

४९३. राजाको उपस्थितिमा उनका अगाडि ब्राह्मणको आसन अपरिहार्य हुन्छ । राजाले बिहान सबै कुराभन्दा पहिले ब्राह्मणको दर्शन र उनको अभिवादन गर्नुपर्छ ।

४९४. बाटो हिंड्दा नौ थरी वा सात थरी व्यक्तिहरूमध्ये पहिले ब्राह्मणलाई बाटो दिनू । भिक्षा माग्नको लागि अरूका घरमा प्रवेश गर्दा छेकथुन नगर्नू ।

४९५. अरूका अधिकारमा रहेका समिधा, फूल र जल आदि ब्राह्मणले लिएमा चोरी गरेको ठहर्दैन । अरू चीजको अपेक्षा नराखी ब्राह्मणले पराईका स्त्रीसँग बातचित गर्नुमा पनि दोष मानिँदैन ।

४९६. नदीहरूमा डुङ्गा यात्रा गर्दा ब्राह्मणलाई सेवा (रकम) नलिई तारिदिनू । पारी पुगेपछि पहिले ब्राह्मणलाई उतारिदिनू । उनले व्यापारका सामान ल्याएका रहेनछन् भने साथका सामानको शुल्क पनि नलिनू ।

४९७. बाटोको हिँडाइले थाकेको भोको ब्राह्मणले अरूको बारी बगैंचाबाट दिउँसो दुई लाक्रासम्म उखु र पाँच वटासम्म कन्दमूल आफैंले लिएर उपयोग गर्दा दोषी ठहर्दैन ।

४९८. मुद्दा लागेकाका जमीनबाट, पतित (पातकी) का जमीनबाट, शत्रुका जमीनबाट, नास्तिकका जमीनबाट, छलकपट गरी अरूलाई धोखा दिनेका जमीनबाट केही पनि नलिनू । दातालाई कष्ट हुने गरी पनि नलिनू ।

४९९. राष्ट्रमा धेरै प्रकारका प्रयोजनहरू आइपर्ने र महात्माहरूमा आर्थिक टेवा गराउनुपर्ने हुनाले राजाले ब्राह्मणबाहेक अरूबाट धन संग्रह गर्नुपर्छ ।

५००. राष्ट्रवासीहरूलाई धर्मपूर्वक रक्षा गर्ने हुनाले र यसै प्रयोजनका निमित्त बलियो अठोट लिएका हुनाले राजा र ब्राह्मणमा केही फरक छैन ।

५०१. धर्म र गुणका पारखी, राष्ट्र र राष्ट्रवासीको रक्षाका निमित्त अपवित्र चालचलन भएका व्यक्तिहरूलाई दण्ड दिने राजा कडा स्वभाव भएका भए पनि उनको धन पवित्र नै हुन्छ ।

५०२. जसरी पवित्र र अपवित्र दुवैथरी पानी समुद्रमा जम्मा हुन्छ। त्यस समुद्रमा पुगेपछि पानी पवित्र कि अपवित्र भन्ने प्रश्नै रहँदैन । त्यस्तै पवित्र र अपवित्र दुवै किसिमका धन राजकोषमा जम्मा हुन पुग्छ, त्यहाँ पुगेपछि धन पवित्र कि अपवित्र भन्ने प्रश्नै रहँदैन, सबै समान हुन्छ ।

५०३. जसरी बलेका आगोमा राखिदिएको सुन शुद्ध अशुद्ध जस्तो भए पनि पवित्र (सफा) हुन्छ, त्यस्तै सबै प्रकारका धनका आगमनहरू राजामा पुगेर पवित्र हुन आउँछन् ।

५०४. कसैले आफ्ना हकको सम्पत्ति ब्राह्मणलाई दिन्छ भने त्यसलाई राजाले पनि अनुमोदन गरिदिनुपर्छ यो सनातन धर्म हो ।

५०५. अरू प्रकारका करहरूभन्दा शास्त्रनिर्दिष्ट हुनाले उचित भएको जमीनको उब्जनीको ६ भागको १ भाग तिरो दुनियाँबाट उनीहरूलाई संरक्षण दिएको पारिश्रमिकको रूपमा प्राप्त गर्न राजालाई अधीकार छ ।

५०६. ब्राह्मणबाहेक अरू जातिलाई दिइएको धन राजाले फेरि उसबाट हरण गर्न पनि सक्छन् । ब्राह्मणलाई एकपल्ट दिएको धन फेरि हर्नुहुँदैन ।

५०७. दान लिनु, अध्ययन गर्नु र यज्ञ गर्नु यी तीन प्रकारको ब्राह्मणको कर्म हुन्छ । अरूको यज्ञ गराउनु, अरूलाई पढाउनु, अरूबाट दान लिनु ती तीन उनका जीविका हुन् ।

५०८. ब्राह्मणले आफ्ना धर्ममा रहनुपर्छ, यसरी आफ्नो धर्ममा रहँदा वृत्तिसङ्कट पर्न आएमा राजाबाट जीविका प्राप्त गर्नू । सङ्कटमा ब्राह्मणले जोसुकैबाट पनि दान लिने शास्त्रमा नियम भए पनि खराब व्यक्तिबाट दान नलिनू ।

५०९. राजाको हुकुमबाट अपवित्र व्यक्ति पवित्र मानिन्छ पवित्र व्यक्ति तुरुन्त अपवित्र मानिन्छ भने राजा किन देवता होइनन् ?

५१०. प्रशस्त तेज भएका राजालाई जुन ब्राह्मणहरू नै देवता मान्छन्, त्यस्ता राजाबाट प्रतिग्रह (दान) लिंदा ती लिनेहरूमा दोष लेपिँदैन अर्थात् ती दोषी मानिँदैनन् ।

५११. यस दुनियाँमा ८ कुरा मङ्गलदायक मानिन्छन् । ती हुन् (१) ब्राह्मण (२) गाई (३) अग्नि (४) सुन (५) घिउ (६) सूर्य (७) जल (८) राजा । यी आठलाई सधैं हेर्नु, नमस्कार गर्नू र यिनको कदर गर्नू । यी आठलाई भेट्ता दाहिना पारेर हिंड्नू । यसो गरेमा त्यसको आयु बढ्छ ।

प्रकीर्णक नामको विवादपद सिद्धियो ।

# चौरप्रकीर्णक नामको प्रकरण

५१२. अरूहरूका हकको सामान लुट्ने ठगहरू दुई प्रकारका हुनछन्, हकवालाले नदेखीकन लिने र हकवालाले देखादेख लिने । यी दुवै प्रकारका चोरहरूलाई राजामा हुनुपर्ने गुणहरूले युक्त राजाले निहारेर चिन्नुपर्छ ।

५१३. तिनमा देखादेख दुनियाँ ठग्ने व्यक्ति यसप्रकार हुन्छन्- (१) तन्त्रमन्त्रको बलमा अरूको सम्पत्ति उठाउने (२) कपटी नाप तौलका साधनद्वारा अरूलाई ठग्ने (३) घूस खाने (४) डकैतीजस्ता काम गर्ने (५) जुवाडे (६) वेश्याहरू (७) नक्सा उतार्ने (८) स्वस्तिवाचन गरी जीविका गर्ने ।

५१४. स्वयं देखा नपरी अप्रकाशरूपमा दुनियाँ ठग्ने चोरहरू यस प्रकारका हुन्छन्- यिनीहरू घरभित्र वा बाहिर लुकेर बस्छन् र घरका जहान जब मस्तसँग निदाउँछन् वा मादक पदार्थ पिएर बेहोस हुन्छन्, त्यतिखेर आक्रमण गरेर ती व्यक्तिलाई तिनले लुट्छन् । लुकेर चोरी गर्ने लुटेराहरू यसप्रकारका हुन्छन्- देशघाती, ग्रामघाती, अरूका घर भत्काई धनमाल लुट्ने, बाटो भत्काउने, अरूको गोठ खोल्ने, बाटा घाटामा मागिहिंड्ने। यी लुकेर चोरी गर्ने प्रच्छन्न लुटेरा हुन् ।

५१५. राजाले सधैं चोर पक्रने काममा लागिपर्ने सिपालु जासूसहरूद्वारा ती चोरहरूको पत्तो लिनू र गुप्तचरहरूलाई पिछा गर्न लगाई तिनलाई पक्राउनू ।

५१६. सभा हुने स्थानहरूमा, पौशालाहरूमा, मिठाइपसलहरूमा, वेश्यालयहरूमा, मदिराका पसलहरूमा, चौबाटाहरूमा, रूखका फेदहरूमा, चौतारीहरूमा, मानिसहरूको जमघटमा, रमिता हेर्ने स्थानहरूमा, निर्जन घरहरूमा, जङ्गलहरूमा र देवमन्दिरहरूमा गुप्तचरहरूले चोरहरूलाई खोज्नू ।

५१७. त्यसैगरी अरू विश्वासिला उनीहरूको इच्छाअनुसारका कुरा गर्ने व्यक्तिहरूलाई ती चोर पक्रने काममा लगाउनू र ती लगाइएका व्यक्तिहरूले पहिले चोरीको काम गर्ने व्यक्तिहरूलाई हात लिएर तिनीहरूका माध्यमबाट ती बाहिरिया चोरहरूलाई अन्नपान, सामदान दिलाएर उनीहरूद्वारा नै सामाजिक उत्सवहरू देखाउन लगाउनू एवं चोर्ने तौरतरीकाहरूको उपदेश दिलाएर तिनीहरूलाई पनि ती बाहिरिया चोरहरूका समाजमा घुलमिल गराउनू ।

५१८. यसरी पूरा निग्रनीसाथ सावधान भएर आफ्ना चङ्गुलमा ल्याउन पिछा गराए पनि जो आउँदैनन्, तिनीहरूलाई पूरै आक्रामकरूपमा जाइलागेर उनका पुत्र, पशु, बन्धुबान्धवसहित पक्रनू ।

५१९. त्यहाँ जुनजुन चोरहरू पक्राउ पर्दछन्, तिनलाई मोसो पोती रङ्गीविरङ्गी गराई यी यस्ता समाजपीडक चोर हुन् यिनलाई आज

फाँसीमा चढाइन्छ भनेर घोषणा गरी चित्रवधद्वारा उनको हत्या गराइदिनू ।

५२०. दसी फेला नपरेका निरपराध चोरहरूलाई राजाले वधदण्ड नदिनू । दसी फेला परेका चोरी गर्ने साधनहरूसमेत साथमा भएका चोरहरूलाई राजाले तुरुन्त दण्ड दिनू ।

५२१. जुन चोरहरू स्वदेशघाती काम गर्दछन् र बाटा घाटामा अवरोध खडा गर्दछन्, राजाले तिनको सर्वस्व हरिलिनू र सामाजिक भर्त्सना पनि गराउनू ।

५२२. दसी फेला नपरेका परन्तु चोरीको शङ्काले मात्र पक्रिएका व्यक्तिहरूलाई डर, धाक आदि देखाएर त्यसरी कायल गराउनू, जसरी उनीहरू आफ्ना कुकृत्य स्वयं बकून् ।

५२३. चोरलाई पक्राउ गर्दा कर्मचारीहरूले पक्राउ परेका व्यक्तिले अपराध गरेको ठाउँ, वेला, दिशा र उसको जात नाम घरबार सबै स्पष्ट रूपमा सोध्नू ।

५२४. अनुहारको रङ्ग स्वर आकारमा फरक पर्नाले, सोधेका प्रश्नको जवाफ जनसमाजमा दिन नचाहनाले, समयमा कुठाउँमा देखिनाले वा उसले बताएको देशकाल नमिल्नाले, ऊ बसेको स्थान सफा नगर्नाले, पहिले धेरै पटक चोरीमा पक्रिएर समाजले सहन नसक्ने स्थिति हुनाले, रातदिन बदमासहरूको मात्र संगत गर्ने हुनाले, बेकाइदासँग खर्च गर्नाले, कसैसँग सम्पर्क नगर्नाले यी सब कुरा

लेखेर ठम्याएर चोर पक्रनुपर्छ । केवल दसीबाट मात्र चोर पक्रिइँदैन ।

५२५. चोरी व्यवसाय गर्ने व्यक्तिमा र लुटेरामा शङ्का लागेमा सानै प्रमाण प्राप्त भए पनि त्यसलाई पक्रिएर शपथ गराइहाल्नू ।

५२६. चोरी पेशामा लागेका व्यक्तिलाई खान दिने, आगोपानी दिने, काम दिने, अर्तीउपदेश दिने, बस्ने ठाउँ दिने, भाग्ने मौका दिने, उनीहरूले चोरी गरेर ल्याएका सामान किनिदिने, सरसापट दिने र ढाकछोप गरी दण्ड पाउनबाट उसलाई बचाउने व्यक्तिहरूलाई पनि चोरसरह दण्ड गर्नू ।

५२७. राष्ट्रमा अख्तियार पाएका व्यक्तिहरू र प्रमुखद्वारा प्रश्रय दिइएका सामन्तहरू राष्ट्रमा महत्त्वपूर्ण सङ्कट पर्दा तटस्थ रहन्छन् भने ती चोरबराबर हुन् ।

५२८. आधिकारिक निगरानीमा रहेको जुन स्थानमा चोरी हुन्छ, त्यही अधिकारीले चोरहरूको सुराक पत्ता लगाउनुपर्छ । चोर पत्ता लाग्न नसकेमा चोरिएका मालको हर्जाना उसैले तिर्नुपर्दछ ।

५२९. कर्मचारीको असावधानीले चोर झ्यालखानाबाट निस्किएमा वा बेपत्ता भएमा त्यस चोरले तिर्नुपर्ने हर्जाना जरीवाना अरूहरूलाई तिराउनू । त्यसका जिम्मेवार व्यक्तिहरू सामन्त, मार्गरक्षक र दिक्पालहरूबाट सो हर्जाना तिर्न लगाउनू ।

५३०. कसैको घरमा चोरी भएमा राजाले चोरलाई पक्रन लगाउनू । पक्रिसकेपछि चोर बेपत्ता भयो फेला पार्न सकिएन भने चोर पक्रने

व्यक्तिलाई त्यसको हर्जाना तिराउनू वा राष्ट्रिय जिम्मेवार निकायबाट असूलउपर गराउनू अथवा दोषी व्यक्तिलाई खोजाई उसैलाई त्यसको हर्जाना तिराउनू । जसको धनमाल चोरी भएको भनिएको छ, त्यसै उपर शङ्का भए मेरो यति धनमाल चोरियो भन्न आउने व्यक्तिलाई शपथ गराउनू । जरुरत परे शारीरिक दण्ड पनि दिनू । यसबाट मामला प्रष्ट हुन आउँछ । सामान चोरी भएको हो भन्ने तथ्य साबित हुन्छ ।

५३१. सही छानबीनको अभावमा वस्तुतः चोरी नगरेको तटस्थ व्यक्तिलाई अमुक व्यक्तिको यस मितिमा यहाँबाट गायब भएको अमुक सामानका चोर तिमी ठहरिएका छौ अमुक प्रमाणबाट, त्यस कारण तिमीलाई हिरासतमा लिइएको छ भन्ने बेहोरा सुनाएर पक्राउ गरेमा वास्तविक चोरले तत्काल सफाइ पाउने हुनाले छानबीन ठीकसँग भएपछि वास्तविक चोर पक्रिएपछि दोषफत्तुर लगाउने व्यक्तिलाई दुइ गुना दण्ड गर्नू ।

५३२. चोरी भएर गएको माल जस्ताको तस्तो दाखिला गराउन सकेसम्म प्रयास गर्नू । सो सम्भव नभएमा त्यसको मूल्य चोरबाट असूलउपर गरी त्यो मूल्यबराबर जरीवाना पनि गर्नू ।

५३३. काठ, डाँठ, घाँस आदिका र माटाका भाँडाबर्तनहरू एवं बाँसुरी र बाँसका सामानहरू तथा बेत, हाड र छालाबाट तयार गरिएका भाँडाहरू चोरेमा जरीवाना गर्नू । हरियो साग, आलो मूला, फलफूल, गोरस, उखुबाट तयार गरिने खुदो, सखर, चिनी,

मिस्रीहरूको तथा नून, तेल र पकाएका तयारी खाद्यान्नको, विभिन्न प्रकारका मदिराहरूको, मासुको र यस्तै अरू कम मूल्यवाला पदार्थको चोरी गरेमा चोरिएको पदार्थको मूल्यभन्दा पाँच गुना बढी त्यसका चोरलाई दण्ड गर्नू ।

५३४. ढक तराजुमा राखी तौलनुपर्ने वा माना-पाथी आदिद्वारा नाप्नुपर्ने पेय पदार्थ वा एकएक एकाइका रूपमा गन्नुपर्ने पूर्वोक्त अल्पमूद्र द्रव्यको भन्दा बढी मोल पर्ने पदार्थको चोरी भएमा ती चोरिएका पदार्थको मूल्यभन्दा दश गुना बढी चोरलाई दण्ड गर्नू ।

५३५. दश घ्याम्पा धान चोर्ने चोरलाई बढीमा मृत्युदण्ड र कममा चोरिएका धानको मूल्यभन्दा ११ गुना बढी दण्ड गर्नू ।

५३६. सुन चाँदी आदि मूल्यवान् धातु र उत्तम जातका कपडाहरू एवं प्रमुख रत्नहरू एक सयभन्दा बढी चोरेकोमा त्यस्ता चोरलाई मृत्युदण्ड दिनू ।

५३७. पुरुषलाई अपहरण गरेमा उत्तमसाहस दण्ड गर्नू । स्त्रीलाई अपहरण गरेमा सर्वस्व गरिदिनू । कन्यालाई हरेमा मारिदिनू ।

५३८. हात्ती, ऊँट, बाघ, भालु, गैंडा जस्ता ठूला खालका पशुहरू चोरेमा त्यस्ता चोरलाई उत्तमसाहस दण्ड गर्नू । मझौला खालका पशुहरू चोर्नेलाई मध्यमसाहस दण्ड गर्नू । बाख्रा जस्ता साना पशुहरू चोर्नेलाई प्रथमसाहस दण्ड गर्नू ।

५३९. मझौला पशुको अपहरण गर्नेलाई मध्यमसाहस दण्ड गर्नू । २४ पणदेखि ९६ पणसम्मको अर्थदण्ड प्रथमसाहस भनिन्छ । २००

देखि ४०० पणसम्मको अर्थदण्ड मध्यमसाहस भनिन्छ । ५०० पणदेखि १००० पणसम्मको अर्थदण्ड उत्तमसाहस भनिन्छ । यसरी तीन साहसमा दण्डविधि ब्रह्माजीले तोक्नुभएको छ ।

५४०. पहिलो पल्ट औंलाले अरूको गाँठो खोल्दा पक्रिएका व्यक्तिलाई उसका दुवै बूढीऔंला काट्ने दण्ड दिनू । दोस्रो पटक गाँठो खोल्ने व्यक्तिलाई उसका बाँकी औंला काटी प्रथमसाहस अर्थदण्ड पनि गर्नू ।

५४१. गाईहरूका जमातमा र ब्राह्मणका संस्थाहरूमा चोरी गरेमा चोरका औंलाहरू काटिदिनू । दासीलाई अपहरण गरेमा त्यस अपहरणकारीको आधा खुट्टा काटिदिनू ।

५४२. दुष्ट वा चोरको शरीरका जुनजुन अङ्गले मानिसहरूलाई सताउने काम गर्दछ । त्यसका तीती अङ्गहरूलाई काटिदिनू भन्ने मनुको शिक्षा छ ।

५४३. अत्यधिक महत्त्वपूर्ण द्रव्यको चोरी गर्ने चोरलाई दण्ड पनि त्यसैअनुसारको गर्नुपर्छ । सामान्य किसिमको चोरीमा पहिलाको जस्तो नभई दण्ड पनि अपेक्षाकृत हल्का हुनुपर्छ ।

५४४. ब्राह्मणबाहेक क्षत्रिय, वैश्य र शूद्र यी तीन वर्णका व्यक्तिहरूका लागि दण्ड दिने स्थानहरू दश हुन्छन् भनी स्वयम्भू मनुले भन्नुभएको छ । ब्राह्मण अक्षत (घाउचोटरहित) रहन्छ । यो सार्वकालिक नियम हो । जननेन्द्रिय, पेट, जिब्रो, दुवै हात, दुवै

खुट्टा, आँखा, नाक र दुवै कान, उसको निजी सम्पत्ति एवं उसको पूरा शरीर दण्डका स्थान हुन् ।

५४५. राष्ट्रको नेतृत्व गर्ने व्यक्तिले देश, काल र परिस्थितिअनुसार वास्तविकरूपमा अपराधको पूरा जानकारी लिई त्यो अपराध दूरगामी कुप्रभाव पार्ने खालको छ कि सामान्य छ सो ठम्याई त्यसमा लागिपर्ने साराको तलासीसमेत लिई विचार गरेर मात्र दण्ड तय गर्नू ।

५४६. आफनो ज्यान माया मारेर आँटिलो उग्रअपराध गर्ने व्यक्तिलाई राजाले मित्र भनेर वा उसलाई छोडिदिएको खण्डमा पर्याप्त सम्पत्ति आउने देखेर छोड्नुहुँदैन यो कुरा मनुले भन्नुभएको हो ।

५४७. प्राणदण्ड दिन नहुने व्यक्तिलाई प्राणदण्ड दिलाएमा राजा जति अधर्मी हुन्छन्, प्राणदण्ड दिनुपर्ने व्यक्तिलाई सो नदिलाए पनि उनी त्यति नै अधर्मी हुन्छन् । राजा धर्मात्मा तब हुन्छन्, जब अपराधीलाई अपराधअनुसारको उचित दण्ड दिलाउँछन् ।

५४८. सम्पूर्ण प्रकारका पाप कर्ममा संलग्नता भए तापनि राजाले ब्राह्मणलाई कुनै पनि हालतमा प्राणदण्ड नदिनू । बरु उनलाई देशनिकाला गरिदिनू। यो धर्मको मर्यादा हो । अथवा ब्राह्मणले त्यस्तो उग्र अपराध गरेमा उसको सर्वस्वहरण गरिदिनू वा चार भागको एक भाग छोडेर बाँकी सम्पत्ति जफत गर्नू । प्रजापतिको धर्मलाई ख्याल गरेर ब्राह्मणमा अरू दण्ड नगर्नू । यो प्रजापतिको मर्यादा हो ।

५४९. ब्राह्मणले गुरुतुल्यगमन (आमा, सानीआमा, गुरुमा, भाउजु, छोरी र दिदीबहिनी जस्ता व्यक्तिहरूसँग संभोग) गरेमा, मदिरा पिएमा, चोरी गरेमा, ब्राह्मणलाई मारेमा वा भ्रूणहत्या गरेमा उनका शरीरमा खोपेर नमेटिने गरी दाग लगाइदिनू । गुरुतुल्यगमन गरेमा उनका निधार आदि देखिने अङ्गमा स्त्रीयोनिको चिह्न बनाइदिनू । चोरी गरेमा कुकुरको पाइलाको चिह्न बनाएर नमेटिने गरी डामिदिनू । ब्रह्महत्या गरेमा वा भ्रूणहत्या गरेमा उनका निधारमा शिर नभएका शरीरको चिह्न खोप्न लगाउनू । ऊसँग कसैले बोल्न र कुरा गर्न निषेध गरिदिनू । यो मनुको आदेश हो ।

५५०. चोरले आफ्ना शिरका केश खुला गराएर आफ्नो अपराध बताउँदै, महाराज ! मैले अमुक चोरी गरें मलाई उचित दण्ड दिलाइबक्स्योस् भन्दै दौडिएर राजाको पछि लाग्नू । यसरी आफ्नो अपराधको आफैं घोषणा गरेकोले चोर निष्पाप हुन्छ । राजाले उसलाई उचित दण्ड नदिई छोडिदिएमा त्यस पापको भागी राजाले हुनुपर्दैन ।

५५१. मानिसहरूले पाप गरे तापनि राजाबाट उनीहरूले उचित दण्ड पाए भने उनीहरू पुन्यात्मा व्यक्तिहरू जस्तै निष्पाप भएर स्वर्ग जान्छन् । अपराधीले राजालाई यथार्थरूपमा आफ्नो अपराध सुनाइसकेपछि राजाले उसलाई दण्ड गरे पनि नगरे पनि ऊ

निष्पाप हुन्छ । उसलाई राजाले विनादण्ड मुक्त गरिदिएमा त्यसका पापले राजालाई नै पकड्छ ।

५५२. पुरुषमा हुनुपर्ने असल गुण भएका आत्मवान् व्यक्तिलाई शासन गर्ने गुरु हुन्छन् । खराब चालचलन भएका दुरात्माहरूलाई शासन गर्ने राजा हुन्छन् । गोप्य पाप भएका पापीहरूलाई शासन गर्ने सूर्यपुत्र यमराज हुन्छन् ।

५५३. शूद्रले चोरी गरेमा उसलाई ८ पाउ पाप लाग्छ भने वैश्यले चोरी गरेमा १६ पाउ एवं क्षत्रियले चोरी गरेमा ३२ पाउ र ब्राह्मणले चोरी गरेमा ६४ पाउ पाप लाग्छ भनेर स्वयम्भू ब्रह्माका पुत्र मनुले भन्नुभएको छ । ज्ञान बढी हुने हुनाले विशेषरूपले विद्वान्लाई दण्ड पनि ज्यादा हुन्छ ।

५५४. दण्ड दुइ प्रकारका हुन्छन्- (१) शारीरिक दण्ड (२) आर्थिक दण्ड । यसमा शारीरिक दण्ड दश प्रकारको हुन्छ भने आर्थिक दण्ड अनेक प्रकारका हुन्छन् । आर्थिक दण्ड एक कौडीदेखि लिएर व्यक्तिको सर्वस्वसम्म हुन्छ । शारीरिक दण्डव्यक्तिलाई झ्यालखानामा थुनेर कष्ट दिनुदेखि लिएर प्राणदण्डसम्मको हुन्छ ।

५५५. काकिणी आदि जो अर्थ दण्ड बताइएको छ, त्यो कम्तीमा एक मासासम्मको हुन्छ भनी मानिएको छ । एक मासाबाट शुरू हुने जो दण्ड छ, त्यो बढीमा एक कार्षापणसम्मको हुन्छ ।

५५६. कम्तीमा कार्षापणबाट शुरू हुने दण्ड चार कार्षापंणसम्मको हुन्छ । दुइ कार्षापणबाट शुरू हुने दण्ड बढीमा आठ कार्षापणसम्मको हुन्छ । अर्को एक प्रकारको दण्ड तीन कार्षापणबाट शुरू भएर बाह्र कार्षापणसम्म वा त्यसभन्दा बढीको हुन्छ । कार्षापण आदि जुन दण्डका परिमाणहरू यहाँ बताइए ती सबै पहिलापहिलाका अपेक्षा उत्तरोत्तर दोस्रो, तेस्रो आदि चारचार गुना बढी हुन्छ । यसैगरी हेरेर अरू पनि परिमाणहरू सम्झनुपर्ने हुन्छन् । यी दण्डविधानहरू पूर्वसाहस भनिन्छन् ।

५५७. दक्षीण दिशामा कार्षापणनामक सिक्का चाँदीद्वारा तयार गरिन्छ र त्यही चल्छ । पूर्व दिशामा पणसँग सम्बद्ध कार्षापण अर्थात् यति पणबराबर एक कार्षापण भनेर व्यवस्था गरिएको कार्षापण चल्छ । त्यो बीस पणबराबर हुन्छ ।

५५८. कार्षापणको बीस भागको एक भाग मास कहलाउँछ । मास र पणको चार भागको एक भाग काकणी कहलाउँछ ।

५५९. पञ्जाब प्रदेशमा मुद्राको जुन व्यावहारिक नाम प्रचलित छ, त्यसमा कार्षापणको प्रमाण या परिमाण दिइएको छैन । कार्षापण भनेको अण्डिका हो । चार अण्डिकाको एक धानक हुन्छ । बाह्र धानकको एक सुवर्ण हुन्छ । दीनार भनिने पनि चित्रक भनिने पनि त्यही हो ।

५६०. राजाले हर समय सावधान भएर वार्ता (कृषि पाशुपाल्य वाणिज्य), त्रयी (वेद) र दण्डनीति (राजनीति) को अनुसरण गर्नुपर्छ । यी

तीन (वार्ता, त्रयी र दण्डनीति) मा भाँजो हाल्ने पापी शत्रुलाई शास्त्रमा बताइएका कुशल उपायहरूद्वारा पकडिएर नष्ट गरिदिनुपर्छ ।

नारदले बताएको संहितामा चौरप्रकीर्णक नामको प्रकरण सिद्धियो ।

# व्यवहार प्रकरण

५६१. ब्राह्मणलाई मार्ने, बाबुलाई मार्ने, गाईलाई मार्ने, आमालाई मार्ने, गुरुलाई मार्ने, बालकलाई मार्ने, गुरुतल्पगामी, धेरैले बनाएको मर्यादा तोड्ने र स्त्रीहत्या गर्ने यी यहाँ बताइएका उग्र पापीहरू जुन जस्ता लोकहरूमा जालान्, सोधेका प्रश्नहरूका जानाजान झूटा जवाफ दिने व्यक्ति पनि तिनैतिनै त्यस्तै लोकहरूमा जान्छन् ।

५६२. वास्तविक साक्षी साँचोलाई नछोडी बोल्छ, साँचो व्यवहारले धर्म बढ्छ, त्यस कारण सबै जातका व्यक्तिहरूका सम्बन्धमा साक्षीले सत्य कुरालाई लिएर बोल्नुपर्छ ।

५६३. मुद्दाविवादमा हिंड्ने व्यक्तिहरूको साक्षी छैन भने त्यस्तो अवस्थामा अभियुक्तलाई विभिन्न प्रकारका शपथहरू गराएर र दिव्य (दिव्य उपाय भन्नाले अभियुक्तको हत्केलामा आगो राखिदिने वा पानीमा डुबाउने) उपायहरूद्वारा जाँच्नुपर्छ ।

५६४. शपथ गराउँदा अभियुक्तलाई उसका सत्य, वाहन, हतियारहरू, गाई, बीज, चाँदी, देवता, त्रुटिहरू, दान र पुण्यहरूलाई भाकेर शपथ गर्न लगाउनू । जस्तै यो अपराध मैले गरेको रहेछ भने मेरो सत्य नष्ट होस् यस वाहनले मलाई नष्ट गराओस् इत्यादि भनाएर शपथ गराउनू ।

५६५. मनुष्यमा सर्वोत्तम प्रतिष्ठा भएका राजाले ठूलाठूला अपराधहरूमा अभियुक्तलाई दिव्य प्रयोग गराउनू । सानातिना अपराधहरूमा चाहिँ उसलाई शपथद्वारा नै काबुमा ल्याउने काम गर्नू ।

५६६. सानातिना अपराधका शङ्कामा अभियुक्तलाई यहाँ बताइएका शपथहरू सजिलै गराउन सकिने रुपमा बताइएका छन् । चोरी, ज्याज मार्नु र अरूका स्त्रीहरूमा हातपात गर्नु जस्ता ठूला साहसिला अपराधहरूमा दिव्य विधिलाई प्रयोगमा ल्याउनुपर्छ ।

५६७. साहसिला ठूलाठूला अपराधको सन्देहमा र विशेषगरी गोप्य अपराधहरूमा अभियुक्तलाई दिव्य प्रयोगमा सामेल गराउनुपर्छ । यो दिव्य प्रयोग पाँच प्रकारको हुन्छ भनेर भगवान् मनुले आज्ञा गर्नुभएको छ ।

५६८. तुलो, अग्नि, जल, विष, कोश यी पाँच दिव्य उपायहरू निर्दोष, तर लाञ्छना लगाइएकाहरूलाई विशुद्ध घोषित गराउनका निमित्त हुन् । यिनीहरूलाई दूषित गराइँदा यिनीहरू दोषी नै हुन् वा होइनन् भन्ने सन्देहमा उनीहरूको सही विशुद्ध रूप साबित गर्न सत्य र भएको कुरा केलाउनमा पारखी नारद ऋषिले दोहोऱ्याएर बताएका छन् ।

५६९. विद्वान् राजाले वादी प्रतिवादी दुवैको अनुमति लिएरमात्र यस्तो दिव्य उपायलाई प्रयोगमा ल्याउन लगाउनू, नत्र गराउनुहुँदैन । तुलाका पाउ अर्थात् तुलो झुण्ड्याउनका लागि गाडिने खम्बा दुवै ६/६ हातका हुनुपर्छ र जमीनमाथि तिनको उचाइ परिमाणमा

४/४ हातको हुनुपर्छ । दुवै खम्बाका बीचको अन्तर १ १/२ हातको हुनुपर्छ । त्यस सुदृढ तुलादण्डका दुइ छेउमा दुइ पल्ला झुण्डयाउनू र त्यसमा पहिले पुरुषलाई तौलिएर तुलोमा चिह्न लगाउनू ।

५७०. त्यसमा तुलाको एकतर्फ पुरुषलाई राख्नू अर्कातर्फ पत्थर राख्नू तौलनू । तौलको परीक्षणका लागि सुनारहरू र व्यापारीहरू तौल ठीकठीक खुट्ट्याउन सिपालु व्यक्तिहरू काँसो धातुका भाँडाबर्तन बिक्री गर्ने व्यक्तिहरू जस्ता तुलाको सञ्चालन वा तौलका बारेमा ठीकठीक जानकारी राख्ने व्यक्तिहरूले तौलको परीक्षण गर्नू ।

५७१. पुरुषलाई तौलनु र तुलामा चिह्न लगाउनू । कक्षाका ठाउँमा जब बराबरी आउँछ तब पुरुषलाई तुलाबाट उतारेर शपथद्वारा उसलाई फेरि तुलामा चढाउनू । त्यस व्यक्तिलाई त्यसरी फेरि तुलामा चढेपछि निश्चित कक्षा राख्नू ।

५७२. तुला (तौल) को परिमाण लेख्नका लागि टोड्को नपरेका खयर वा तीँदू वा शिशौ वा सालका नसुकेका चारपाटे परेका तीन-तीन स्थानमा तुलाको गँगटाको आकार बनाएका चोट नलागेका (काठहरू तयार गर्नू) ।

५७३. यस्ता काठहरू तुलाको लागि तयार गर्नू । सभाभवनको ढोकामा, राजभवनका ढोकामा, देवमन्दिरका अगाडिका चौरमा ती काठ नचल्ने गरी गाड्नू र तिनलाई बास्ना आउने धूप श्रीखण्ड चन्दनले पूजा गर्नू ।

५७४. दही दूध अक्षता सुगन्धित द्रव्यहरूले पूजा गर्नू, सिँगार गर्नू । त्यसपछि ती गाडिएका काठहरूमा धर्मरक्षाको लागि लोकपालहरूको आह्वान गर्नू । यी लोकपालहरूले आश्रय गरेका काठका सामुमा शपथ गराउनुपर्ने व्यक्तिलाई एक दिन उपवास गराउनू र स्नान गराएर चीसै कपडासँग पूर्वाह्नमा उसलाई सबै प्रकारका दिव्य शपथ गराउनू भनिन्छ ।

५७५. शिर झुकाएर वादी (अभियोक्ता) उपस्थित भएपछि दिव्य शपथ गराउनू भनिएको छ । परन्तु राजाको सम्बन्धमा चाहिँ यो कुरा अन्यथा हुन सक्छ । हुरी नचलेको र वर्षा नभएको वेलामा यो मुद्दा लगाइएको व्यक्ति आफ्नो शिरमा पत्ता (पत्र) राखेर सचैलस्नान गरी उपस्थित भएमा शिरानमन र तुलारोहण दुवै कुरा नगरेका व्यक्तिलाई लक्ष्य गरेर तल लेखिएका कुरा भन्नू ।

५७६. ॐ धर्मलाइ नमस्कार छ ।

५७७. हे तुला ! सम्पूर्ण प्राणीहरूका पाप र पुण्य तिमी नै जान्दछौ, जुन पाप पुण्य मनुष्य जान्न सक्तैनन् । यो पापी मुद्दा लागेको मानिस तिमीद्वारा तौलिइन्छ । त्यस कारण तिमी यस व्यक्तिले यो पापी काम गरेको हो वा होइन भन्ने शङ्कास्पद यी मानिसलाई धार्मिक आधारमा पवित्र गराउन लायक छौ । यसरी तुलामा तौलिएको व्यक्ति नतौलिदांका अवस्थाका अपेक्षामा बढ्यो भने धार्मिक आधारमा त्यो व्यक्ति निर्दोष मानिन्छ । पहिलेकै बराबर रह्यो वा त्यसभन्दा पनि घट्यो भने विशुद्ध मानिँदैन । तुलामा

चढ्नुअगाडि जति परिमाणको छ, तुलामा चढ्दा पनि त्यति नै परिमाणको भएमा व्यक्ति समान मानिन्छ, कम भएमा अधोगतिमा जान्छ । त्यस्तो व्यक्ति विशुद्ध हुँदैन । विशुद्ध हुनका लागि पहिलेभन्दा बढी नै हुनुपर्छ अर्थात् ऊर्ध्वगति हुनुपर्छ।समान व्यक्ति पनि विशुद्ध हुनसक्छ।यस्तो तीन प्रकारको तौल हुन्छ।यस पद्धतिलाई तुलाकल्प भन्छन्। यस तुलाकल्पले दूधको दूध पानीको पानीका रूपमा केही फरक नपर्ने गरी दोषी र निर्दोषीलाई खुट्टयाइदिएको छ ।

५७८. अब यसपछि अग्निपरीक्षाका लागि फलाम तयार गर्ने उत्तम विधि बताइनेछ- सङ्ख्याशास्त्रको तत्व जान्ने व्यक्तिहरूले यस कार्यका लागि २२४ अङ्गुलभन्दा केही अधिक समतल गोलाकार जमीनको परिकल्पना गर्नू र त्यसमा पहिले सानो, त्यसपछि ज्यादा ठूलो, त्यसपछि अझ ठूलो गराउँदै सातवटा मण्डल (वृत्त) बनाउनू । किन्तु ती प्रत्येक मण्डलहरूका अन्तर ३२/३२ अङ्गुलका हुनु आवश्यक हुन्छ । यसरी निर्माण गरिएका सात मण्डलहरूले २२४ अङ्गुल परिमित जमीन ढाकिएको हुनुपर्छ । अब अपराधी सम्झिएका व्यक्तिलाई एक दिन उपवास गराई कपडैसँग स्नान गर्न लगाउनू र सावधानीसाथ पवित्र भएर चीसा कपडैसँग मण्डलमा बस्न लगाउनू । अनि उसका दुवै हातमा धागो बेरेका सातवटा पिपलका पात राखिदिनू । राखिएको गोलाकार

डल्लोलाई आगोमा रातो हुने गरी तताइराख्नू र यी अगाडिका वाक्यहरू भन्नू ।

५७९. ॐ धर्मलाइ नमस्कार छ ।

५८०. हे अग्निदेव ! तपाईं प्राणीमात्रका शरीरमा भित्रभित्र सञ्चार गर्ने उनीहरूले खाएका भोजनहरूलाई पचाउने ज्योतिस्वरूप हुनुहुन्छ । तपाईं नै प्राणीहरूका प्रवृत्त्यात्मक र निवृत्त्यात्मक कर्महरूलाई चलाउनुहुन्छ । यो पुरोवर्ती मुद्दा लागेका व्यक्तिको गलत वा सही व्यवहार छुट्टयाइदिने काम तपाईंकै हो । तपाईंको परीक्षणपछि यो व्यक्ति आफ्नो अधार्मिक स्वभावलाई छाडेर सत्यव्यवहार गर्ने बानी परेको हुनेछ । यति भनेर फलामको त्यो तातो डल्लो उसका हातमा राखिदिनू । एक दिनको उपवासले पवित्र भएको त्यस व्यक्तिले सात मण्डलका पहिला मण्डलमा उभिएर बिस्तारै फलामको आगोसमेतको त्यो डल्लो बोकी सात मण्डल सात पाइलामा हिंड्नू । अनि खूबसँग तातेका पकडहरूद्वारा स्वस्थ व्यक्तिले ठीकसँग पक्डिएको, त्यस्तै पकडले युक्त भएका लोहारहरूले पनि ताता शपथहरूले अभिमन्त्रित गरिएको, खूबसँग रन्किएको वज्र जस्तै छुन नसकिने, बिजुलीको समूह, बालक पनि होइन, वृद्ध पनि होइन जवान-जवान लोहारहरूले खूब नियन्त्रणसाथ सहयोग गरिनुपर्छ । त्यस अभियुक्तले मण्डललाई नाघ्न पनि हुँदैन, त्यसभन्दा पहिले बीचमा खुट्टा राख्न पनि हुँदैन । जति जमीन नाघेर जहाँ पुग्नुपर्ने हो,

ठीक त्यहींमात्र पुऱ्याइएको हुनुपर्छ । यस विधिअनुसार होसियारीसाथ सबै मण्डलहरूलाई पार गरी नजलीकन जो रहन सक्छ, त्यही व्यक्ति शुद्ध (निर्दोष) मानिन्छ । जुन व्यक्ति उक्त अग्निमय लोहपिण्डलाई डराएर बीचमै छाडिदिन्छ वा त्यसले आफूलाई जलाएको पत्ता पाउँदैन । त्यस व्यक्तिलाई पूर्वोक्त रीतिले फेरि त्यो अग्निमय लोहपिण्डलाई त्यसैगरी उठाउन लगाउनू । पुरानो मर्यादा यही हो । जुन व्यक्ति अग्निमय लोहपिण्ड लिएर सात पाइलामा पार गर्नुपर्ने सातौं मण्डलसम्म पार गर्छ, एक प्रहर (३ घण्टा) पछि त्यसका हात हेर्नू । जसको हात रेखा आदि लक्षणहरूले युक्त पहिलेको जस्तै हुन्छ, त्यसले मुद्दा जित्यो अन्यथा त्यसको पराजय भयो । यसै विधिअनुसार विजय र पराजय छुट्टयाउनू ।

५८१. अब यसपछि जलको प्रयोगद्वारा अपराधी छुट्टयाउने विधि बताइनेछ । जुन राजा उत्तम शुद्धि दूधको दूध पानीको पानीका रूपको सफाइ चाहन्छन् उनले हेमन्त ऋतुमा यो यहाँ बताइने जलप्रयोग नगराउनू ।

५८२. सातवटा बाणलाई एकसाथ वा लगातार प्रयोगमा ल्याउन सक्ने धनु क्रूरधनु कहलाउँछ । छवटा बाणलाई एकसाथ प्रयोगमा ल्याउन सक्ने धनु नातिक्रूर कहलाउँछ । पाचँवटा बाणहरूलाई एकसाथ प्रयोगमा ल्याउने धनु मन्द कहलाउँछ । यो धनुविधि बताइयो । बाणले प्रहार गर्ने धनुर्धारीको सामु एउटा ठूलो तोरण

बनाउनू र त्यस तोरणको क्षेत्रमा तल पानीभित्र बाणले प्रहार गर्नू, यसलाई बाणविधि भनिएको छ । धनुर्धारीले नातिक्रूर धनुद्वारा तीन बाण पानीमा हान्नू र बाण छोडेकै स्थानबाट माझको बाण लिनका लागि अभियुक्तलाई पहिल्यैदेखि खडा राखेको खम्बा जस्तो बलियो व्यक्तिको तिघ्रा समाएर पानीमा पूरै डुबी मझ्यौला बाण खोज्न लगाउनू । युवा बलियो व्यक्ति वेगसँग दौड्नू र गएर बाण पक्रनासाथ अर्को त्यस्तै बलियो वेगिलो व्यक्तिले खुब वेगसंग बाणसमेतको त्यस व्यक्तिलाई पक्रेर पहिलेको स्थानमा ल्याउनू । त्यसपछि पाँच छ बाण पानीमा डुबेका अपराधिका आसपासमा उसलाई नलाग्ने गरी हानिदिनू । यतिखेरसम्म यो अपराधी आफ्नो कुनै शरीरको अवयव नदेखाई पानीमा डुबेर रह्यो भने विशुद्ध निरपराधी नत्र अपराधी हुन्छ । पहिलेका स्थान छोडेर अन्यत्र गयो भने पनि अपराधी हुन्छ ।

५८३. स्त्रीहरू र दुब्ला पातला पुरुषहरूलाई यसरी जबर्जस्ती पानीमा प्रवेश गर्न नलगाउनू । स्त्रीहरू जलप्रवेशमा ज्यादा डराउने हुनाले र दुब्लो पातलो पुरुष बलहीन हुनाले ती दुवैको जलप्रवेश गराएपछि तुरुन्त मृत्यु हुनसक्छ । त्यस कारण तिनलाई जलप्रवेश नगराउनू ।

५८४. अपराधीले पानीका बीचमा रहेका बलवान् पुरुषको तिघ्रा समाएर जलमा प्रवेश गर्नू र बाण फेला नपरेसम्म त्यहीँ बसिरहनू ।

अर्का विद्वान् व्यक्तिले स्नान गरी मन पवित्र गराई अगाडि बताइने धर्मवाक्यहरू उसलाई सुनाइदिनू-

५८५. धर्ममन्त्र-

ॐ धर्मलाइ नमस्कार ।

हे जलदेव ! तपाईं प्राणीहरूलाई सुख दिने र शीतलस्वरूप हुनुहुन्छ। त्यस कारण यो अभियुक्त व्यक्तिलाई पापबाट बचाइदिनुहोस् । यसको शुभाशुभ तपाईं नै देख्नुहुन्छ । प्राणीहरूका पहिला देवता तपाईं नै हुनुहुन्छ । यो सारा विश्वलाई तृप्त गराउने महत्त्वशाली साधन पनि तपाईं नै हुनुहुन्छ । साँचो र झूटोको छानबीन गरी ती दुवैलाई सुस्पष्ट पारिदिने महान् जलदेव र अग्निदेव नै हुन् । त्यसमा पनि अग्निदानोत्पत्ति पनि जलैबाट भएकोले जलको विशेषपन अरू बढी सिद्ध हुन्छ । धर्मको तत्त्व जान्ने व्यक्तिहरूले दूषित व्यक्तिलाई शुद्ध गराउने काममा जल नै अघि सारिन्छन् । त्यस कारण हे भगवान् जलदेव ! तपाईं सत्यद्वारा यसको रक्षा गर्न लायक हुनुहुन्छ । यति प्रार्थना गरेर अभियुक्तले आफ्ना कुनै पनि अङ्ग बाहिर नदेखिने गरी पानीमा डुबाउनू र बाणको खोजी गर्नू । बाण प्राप्त भएपछि त्यसलाई उठाएर हेरी बुद्धिपूर्वक जलबाट बाहिर आई राजा र सबै सभासद्लाई दण्डवत् प्रणाम गरेर त्यहाँबाट निस्कनू ।

५८६. अब यसपछि विषको प्रयोगको उत्तम विधि बताइन्छ । विष कुन समयमा कसरी प्राप्त भयो। त्यसको तयारी कसरी गरिएको हो। सङ्ख्या परिमाणहरूको मर्म बुझेका व्यक्तिहरूले कति मात्रामा विषको प्रयोग गर्नु भनेका छन्, यी सब कुरा बताइनेछ ।

५८७. पहिले विषलाई तौलनू र जाडो याममा यसलाई प्रयोगमा ल्याउनू। धर्म जान्ने व्यक्तिले दिनको पहिलो भागमा, मध्यभागमा र साँझमा पनि विषको प्रयोग नगर्नू । शरद, ग्रीष्म, वसन्त र वर्षा ऋतुहरूमा विषको प्रयोगमा दोष हुँदैन ।

५८८. फुटेको, दारेको, धूप दिइएको, अरू पदार्थसँग मिसिएको एवं कालकूट विषहरूलाई यत्नसाथ छोडिदिनू ।

५८९. हिमालयमा हुने शार्ङ्गविष जसको वर्ण, गन्ध र रस उपयुक्त छन् असल मानिन्छ । यस्तो विष शास्त्रीय विधिअनुसार लिनू र ब्राह्मणहरूलाई सोधेर उनीहरूले अनुमति दिएपछि त्यस विषको वास्तविक क्षमता बुझन चाहने राजाले ठूलो अपराध गरेका व्यक्तिलाई दिनू ।

५९०. बालक, रोगी, बूढो र सानुतिनु अपराध गर्ने व्यक्ति, मादक पदार्थ पिएर मातेको, पीडित, अङ्गभङ्ग भएको व्यक्ति र तपस्वी यी व्यक्तिहरूलाई विष नदिनू । विष दिनुपर्ने व्यक्तिलाई विष दिँदा घिउमा डुबाएको सात जोडा दाना जति दिनू । पलको छैटौं भाग, पलको बीसौं भाग, पलको आठौं भाग घिउमा डुबाई शोधन गरी दिनू । विष खाने व्यक्तिले एक दिन उपवास गरेर देवता

ब्राह्मणका नजिकमा खानू । विषको वेग विशेष कष्ट नदिई सजिलै पच्यो भने त्यो व्यक्ति निर्दोष रहेछ भनेर राजाले इज्जतसाथ उसलाई छोडिदिनू ।

५९१. विषसम्बन्धी धर्ममन्त्र-

ॐ धर्मलाई नमस्कार ।

हे विष ! तिमी ब्रह्माका पुत्र हौ, तिमी सत्य र धर्ममा रहेका छौ । अतः यस व्यक्तिलाई पापबाट शुद्ध गराऊ, यसले पाप नगरेको सत्य नछोडेको भए यसप्रति तिमी अमृतसमान बन । यो अर्थ भएको यो अगाडिको मन्त्र विधिपूर्वक विषपान गर्दा पढ्नू ।

५९२. अब यसपछि कोशपानको उत्तम विधि बताइनेछ । अघिल्लो एक दिन उपवास गरी स्नान गरेर चोखै कपडासँग खडा रहेका दाह्री पालेका कुनै व्यसन (कुलत) मा नपसेका व्यक्तिलाई एक मुहूर्तसम्म खडा राखी कोशपाननामक अग्निपरीक्षा गराइन्छ । एक मुहूर्त बितिसकेपछि सभासद् र मन्त्रीहरूका साथ राजाले निष्पक्षरूपमा धर्मपूर्वक उसको जिब्रो हेर्नू र तथ्यको परिक्षा गरी दण्डभागी भए दण्ड दिनू, नत्र सभासद्हरूले यो व्यक्ति निर्दोष छ भनी साबित गरिदिएपछि राजाले पत्र पुष्प आदिले उसको सत्कार गरी उसलाई छोडिदिनू ।

५९३. अब पारणवाक्यमन्त्र ।

ॐ धर्मलाइ नमस्कार ।

सूर्य, चन्द्र, वायु, अग्नि, द्युलोक, भूलोक, जलदेवता, प्राणीको आफ्नो हृदय, यमराज, दिन, रात, प्रातःसन्ध्या, सायंसन्ध्या र धर्मले मानिसको चालचलन जान्दछन् ।

मानवधर्मशास्त्रमा नारदले बताएको संहितामा व्यवहारप्रकरण सिद्धियो ।

५९४. अब सप्तप्रकरण लेखिन्छ ।

# सप्तप्रकरण

५९५. सुनको सङ्ख्या जानेर काम गर्नू । १०० घटेपछि विषदीप हुन्छ। ८० घटेपछि अग्निदीप हुन्छ । ६० घटेपछि जलदीप हुन्छ । ४० घटेपछि धटदीप हुन्छ । १३ भाग घटेपछि कोषपान हुन्छ भनी बृहस्पतिले बताएका छन् । ५ भाग घटेपछि तप्तमाष हुन्छ । त्यसको आधा घटेपछि शुद्ध चामल खुवाउनू । त्यसको आधा घटेपछि छोराको टाउको छुनू । त्यसको आधाको पनि आधा घटेपछि लौकिक क्रिया हुन्छ ।

५९६. स्त्रीहरूका लागि विषको प्रयोग बताइएको छैन । उनीहरूका निमित्त जलको प्रयोग पनि छैन एवं तुला कोष आदिको प्रयोग पनि छैन । त्यस कारण स्त्रीहरूका निमित्त अरू नै कुरा सोच्नुपर्छ ।

५९७. कुनै पनि मुद्दा लगाउने व्यक्तिलाई यो यहाँ बताइएको दिव्य प्रयोग नगराउनू । जसलाई मुद्ध लगाइन्छ । उसैलाई मात्र दिव्य प्रयोग गर्न लगाउनू ।

अब तप्तमाषप्रकरण बताइन्छ ।

# तप्तमाषप्रकरण

५९८. सुनको वा चाँदीको वा तामाको वा फलामको वा माटाको भाँडामा गाईको पवित्र घिउ लिएर त्यसलाई आगोमा तताउनू । तीन या दुई तर परेको मनमा डर पैदा गरिदिने त्यस घिउलाई यो अगाडि मन्त्रले एकपटक अभिमन्त्रित गर्नू-

५९९. ॐ धर्मलारइ नमस्कार छ ।

हे घिउ ! तिमी यज्ञकर्ममा अत्यन्त पवित्र अमृतरूप हौ । हे ! प्रयोक्तालाई पवित्र गराउने घिउ, तिमी पापीलाई जलाइदेउ र निष्पाप पवित्र व्यक्तिमा हिउँ जस्तै ठण्डा बन । यति भन्नू र त्यस तातो घिउमा पानीले धेरै पल्ट पखालेको सुनको वा चाँदीको वा तामाको वा फलामको सुन्दर औंठी राखिदिनू । त्यसपछि एक दिन उपवास गरी स्नान गरेर चीसै कपडासँग आएको अभियुक्तलाई हातले त्यो तातो घिउमा डुबेको औंठी झिक्न लगाउनू ।

६००. फलाम, तामो र माटाको पात्र बनाउँदा १६ अङ्गुलको घेरा भएको ४ अङ्गुल गहिरो गोलाकारको बनाउनू र त्यस पात्रलाई २० पल घिउ र तेलले भर्नू । त्यसपछि त्यस पात्रलाई आगोमा तताउनू । खुबसँग तातेपछि त्यसमा एक मासा सुन छोड्नू र त्यो सुनको टुक्रा अभियुक्तलाई उसका बूढीऔंला र अरू औंलाका सहयोगले त्यस पात्रबाट निकाल्न लगाउनू । यसो गर्दा

उसका औँला ताता घिउले विकृत पनि भएनन् विष्फोट पनि भएनन् भने त्यो व्यक्ति धार्मिक दृष्टिले पवित्र हुन्छ । यो ब्रह्मवाक्य हो । त्यसपछि परीक्षकहरूले उसका औँलाको परीक्षा गर्नू, त्यसमा फोका दाग आदि रहेछन् भने त्यो व्यक्ति अपवित्रै ठहर्छ । यो पनि पितामहवाक्य हो ।

तप्तमाषप्रकरण सिद्धियो ।

६०१. ठूलो महत्त्व भएको नारदीय न्यायशास्त्र जुन यहाँ छ, यो कम बुद्धि भएका मानिसहरूको लागि भने जस्तो गरी बुझ्न गाह्रो छ । त्यसको यो स्पष्ट टीका नेवारी भाषामा लेखिन्छ । यो पढेर राजाहरू न्यायमार्गमा हिंडून् ।

६०२. मानवन्यायशास्त्रमा नारद ऋषिले बताएको संहितामा न्यायधर्मपदहरू समाप्त भए ।

६०३. नेपालमा राजाहरूका शिरोमणि स्थितिराज मल्ल राजा हुनुभयो । उहाँका याचकहरूका लागि कल्पवृक्ष जस्ता, असल नीतिका सागर, श्रेष्ठ मन्त्री हुनुहुन्छ । उहाँका लागि मणिक नाम भएका विद्धान्ले ब्रह्माले बताएको धर्मशास्त्रको न्यायविकासिनी नामको प्रसिद्ध टीका नेवारी भाषामा बनाए । सफा बुद्धिको प्रभावले चम्केको नीतिद्वारा देवगुरु बृहस्पतिसँग पनि टेक लिने, सम्पूर्ण गुणका आश्रय एवं स्वच्छ कीर्ति भएको मन्त्रको तेजले उज्यालो, दयाले हृदय पग्लेका, सम्पूर्ण याचकहरूका लागि कल्पवृक्ष जस्ता, चन्दन वर्माका छोरा मन्त्रिश्रेष्ठ जयत चिरञ्जीवी होऊन् । ने.सं. ५०० (वि.सं. १४३६) फाल्गुनशुक्ल तृतीया बृहस्पतिवारका दिन राजल्लदेवीका पति श्रीश्रीस्थितिराज मल्ल राजाको विजयराज्यमा भक्तपुर शहरमा न्यायविकासिनी नामको प्रसिद्ध यो टीका पूरा भयो । बुद्धिमान् लुन्तभद्र वज्राचार्यले मन्त्रिश्रेष्ठ जयतको लागि स्पष्ट बुझिने यो न्यायटिप्पणी सारिसिद्धयाए ।

६०४. ने.सं. ५०० (वि.सं. १४३६) फाल्गुनशुक्ल तृतीया बृहस्पतिवार श्रीश्रीजयस्थितिराज मल्लदेवको विजयराज्यमा भक्तपुरमा मन्त्री जयत वर्माको यो पुस्तक श्रीकीर्तिपुण्यमहाविहारमा बस्ने शाक्यभिक्षु श्रीलुन्तभद्र वज्राचार्यले सारिसिद्धयाए । सम्पुर्ण जगत्को कल्याण होस् ।

६०५. शत्रुका मन्त्रीहरूको सल्लाहरूपी बाक्लो बादललाई हुत्याउन ठूलो हुरीबतास जस्ता, आफ्ना मालिकको काम गर्न भने वायुपुत्र हनूमान् जस्ता श्रीमान् मन्त्री जयत दुनियाँलाई आफ्ना छोराछोरीलाई जस्तै पालना गरून् ।

<u>साभारः</u>

न्यायविकासिनी (मानवन्यायशास्त्र)
कानून सहप्रकाशन, कानून व्यवसायी क्लब, काठमाडौं २०६५